# नेपाली साहित्य संकलन

संस्थापक :
काशीबहादुर श्रेष्ठ



**जस्तो प्रभातोदयले फुल्दछ जगतीतलमा कमल**
**त्यस्तै उदयोदयले फुलोस् नेपाली हृत्-कमल ।**

स्थापित :
वि.सं. १९९३ ई० सन् १९३७

वर्ष ७३ : पूर्णाङ्क १४०
जेठ २०६७ : (जून : २०१०)

सम्पादक
दुर्गा प्रसाद श्रेष्ठ

❖

अक्षर तथा आवरण संयोजन
भी.भी.ग्राफिक्स एण्ड प्रिंटर्स
वाराणसी

❖

कार्यालय
के. २५/९७, चौखम्भा, वाराणसी-२२१००१
फोन : ०५४२-२४१८२६०
E-mail : udaymag@rediffmail.com

भा० रु० १५.००
ने० रु० २५.००
काठमाडौं प्रतिनिधिः
गोविन्द श्रेष्ठ, रत्नपुस्तक भण्डार
फोनः ४२२३०२६

सहयोगी हरू

| काठमाडौं | शिलाङ | देहरादून | मीजोरम |
| --- | --- | --- | --- |
| कृष्णप्रसाद पराजुली | गोपीनारायण प्रधान | भूपेन्द्र अधिकारी | लक्ष्मी मीनू |
| आनन्द प्रकाश नेपाल | हेम जोशी | | |

## यस अङ्कमा

समाचार

# महाकवि देवकोटा शताब्दी समारोह
# अन्तर्राष्ट्रिय नेपाली भाषा साहित्य
# सम्मेलन सम्पन्न

नेपाली भाषा साहित्यमा स्मरणीय प्रभाव दिने गरी काठमाडौंमा पाँच दिन अघि सुरु भएको अन्तर्राष्ट्रिय नेपाली भाषा-साहित्य सम्मेलन पाँच बुँदे घोषणापत्र जारी गरी सोमवार सम्पन्न भएको छ ।

सम्मेलनमा नेपाललगायत भारत, पाकिस्तान, म्यानमा, जापान, रुस, बेलायत, जर्मनी, बेल्जियम र अमेरिकाका नेपाली भाषाका स्रष्टाहरूको सहभागिता थियो ।

महाकवि देवकोटा शताब्दी महोत्सवले आयोजना गरेको सम्मेलन समापनका प्रमुख अतिथि प्रधान न्यायाधीश अनुपराज शर्माले नेपाली भाषा अब कुनै जात विशेषको मात्र नभई समस्त नेपालीको साझा सम्पत्ति भएको विचार व्यक्त गर्नुभयो ।

प्रधान न्यायाधीश शर्माले साहित्य कुनै पनि सीमामा आबद्ध न रहने बताउँदै नेपालीहरूलाई सम्पर्क स्थापित गर्न र एकतामा गाँस्न नेपाली भाषा माध्यम भएको बताउनुभयो ।

उहाँले नेपाली भाषामा लागेको ऐंजुरुलाई समयमै काट्न र पखाल्न सक्नुपर्छ भन्दै आफ्ना छोराछोरीलाई नेपाली शब्दको अर्थ अङ्ग्रेजीमा बुझाउनु पर्दा उदेक लाग्ने गरेको प्रसङ्ग उल्लेख गर्नुभयो ।

समारोहमा प्रमुख अतिथि शर्माले स्रष्टाहरू इन्द्रबहादुर राई, लीलबहादुर क्षेत्री डा. कुमार प्रधान, केदार गुरुङ, केवि नेपाली, दुर्गाप्रसाद श्रेष्ठ, नरबहादुर दाहाल, सानुलामा, महानन्द पौड्याल, भुपेन्द्र अधिकारी, सानुमती राई (भारत), डा. ताहिरा निगत नैयर (पाकिस्तान), लिउ हाङ साङ (चीन), विष्णु पन्थी (म्यान्मार), मिसिजु फुकुदा (जापान), डा. म्यालरी एम इन्टसे (बेलायत), डा. मानफ्रेद श्रोई (जर्मनी), आदिलाई महाकवि देवकोटा शताब्दी सम्मान प्रदान गर्नुभयो ।

सोही अवसरमा महाकवि देवकोटासम्बन्धी प्रा. राजेन्द्र सुवेदी, डा. कुमारबहादुर जोशी, डा. शैलेन्द्रप्रकाश, इन्दिरा प्रसाई, नरेन्द्र राज प्रसाई, डा. मोदनाथ प्रश्रित, शिव रेग्मीका १४ वटा कृति देश विदेशका १४ जना स्रष्टाले विमोचन गर्नु भयो ।

---

'उदय' : जेठ २०६७ (जून २०१०)

सम्मेलन समापनको अवसरमा पाँच बुँदे घोषणा पत्र जारी गर्दै वरिष्ठ साधक सत्यमोहन जोशीले मानचित्रमा नेपाल सानो जस्तो लागे पनि नेपाली भाषाको विस्तार र व्यापकताले नेपाल विशाल रहेछ भन्ने कुराको अनुभूति आफूलाई भएको बताउनु भयो। उहाँले त्रिमूर्ति निकेतनको सक्रियतामा आयोजित प्रथम अन्तर्राष्ट्रिय नेपाली भाषा साहित्य सम्मेलनको सफलता र व्यापक सहभागिताबाटै नेपाली भाषा साहित्यलाई माया गर्ने र साधना गर्नेहरू कति रहेछन् भने बुझ्न सकिन्छ भन्नुभयो।

समापन समारोहमा नेपाल प्रज्ञा प्रतिष्ठानको उपकुलपति गङ्गाप्रसाद उप्रेती, पूर्व उपकुलपति डा. बासुदेव त्रिपाठी, साधक श्यामदास वैष्णव, जगदीशशम्शेर राणा, सानुलामा, डा. कुमार प्रधान, डा. शान्ति क्षेत्री, विन्द्या सुब्बा, गीता उपाध्याय उषा शेरचन, इन्दिरा प्रसाई, नरेन्द्रराज प्रसाईंले सम्मेलनको महत्व र घोषणा पत्रबारे बोल्नु भएको थियो।

महाकवि देवकोटा शताब्दी महोत्सवका अध्यक्ष एवम् सभाका सभापति डा. मोदनाथ प्रश्रितले महोत्सवको महत्त्वबारे प्रकाश पार्नुभयो।



सम्पादकीय:

# केही समारोहः केही अनुभव

सालको आखिर-आखिरमा तीन वटा समारोहमा सम्मिलित हुने मौका पाएँ— पहिलो सेप्टेम्बरको दोस्रो साता देहरादून (भारत) मा आयोजित **भारत नेपाल कवि सम्मेलन**, दोस्रो काठमाडौं (नेपाल) मा आयोजित लण्डनवासी हरिसिंह थापाको उपन्यास र कविता संग्रहको **विमोचन समारोह**, तेस्रो डा. गोविन्द भट्टराईद्वारा अनूदित **महात्मा गांधीको महान् वाणीहरू**को लोकार्पण समारोह।

अनि मैले सम्झें-एउटा अर्को समारोहमा पनि म शरीक भएको थिएँ, काठमाडौंमै विद्वच्छिरोमणि कुलचन्द्र गौतमको ५१ औं पुण्यतिथि मनाउने सिलसिलामा।

मेरो विचारमा यो समारोह मेरो लागि सबभन्दा महत्वपूर्ण थियो। माथि उल्लेख गरिएका तीनोटा समारोहमध्ये पहिलोमा म संयोजक (कोअर्डिनेटर) थिएँ। दोस्रोमा म सभाध्यक्ष थिएँ, तेस्रोमा वक्ता।

पण्डित कुलचन्द्र गौतम संबंधित समारोहमा स्रोताको रूपमा मात्र उपस्थित भए पनि यसले मलाई पचास वर्ष अगाडिको बनारसमा पुऱ्यायो।

कस्तो संजोग ! जुन नेपाली संस्थाको म अहिले अध्यक्ष छु, कुलचन्द्र गौतम त्यसका प्रथम अध्यक्ष थिए। कहाँ विद्वान्हरूका शिरोमणि संस्कृतका महापंडित र कहाँ म एंउटा सामान्य लेखक ! तर हामी बीच एउटा रेखा कोरिन आएछ। कुलचन्द्र गौतमका एक जाना छोरा र एक जाना नातिसंग पनि पचास वर्षपछि भेट हुनु एउटा संजोग नै हो। पचास वर्षमा दुनियाँ कहाँबाट कहाँ पुग्छ। उनका छोराले मलाई भेटेर खुशी हुँदै 'तपाईंसंग बनारसमा बिताएका क्षणहरू संझिन्छु, दूध विनायकमा नथुनी सरदारको चिया पसलमा चिया खाएको संझिन्छु, छोरा विश्वचन्द्र गौतमले भने। उनी त्यस बेला गृष्मबहादुर देवकोटाले लेखेको पत्रपत्रिका र छापाखानाको इतिहास छपाउन निकै समय बनारस बसेका थिए। छपाईका लागि प्रेसको व्यवस्था पूज्य पिताज्यू काशी बहादुर श्रेष्ठले मिलाएका थिए।

कुलचन्द्र गौतमका नाती सुशीलचन्द्र गौतम मसंगै पढ्थे। म उनको वास रामघाटको घरमा बराबर जान्थें। सुशील र म 'चेस' पनि खेल्थें। उनका भाई प्रसन्न पनि दाजूसंगै पढ्न बसेका थिए। 'म त्यति बेला दस वर्षका थिएँ'—डा. प्रसन्नचन्द्र गौतमले पुरानो सम्झनाहरू कोट्याउँदै अनेक मीठा कुराहरू भने। उनी अहिले

स्कटल्याण्डमा निवास गर्छन्। पेशाले चिकित्सक भए पनि संस्कृतपट्टि रूचि राखेर विद्वता हासिल गरेका छन्। उनले आफ्ना बाजेको कीर्ति राख्न एउटा संस्था पनि खोलेका छन् र ऋग्वेदको अनुवाद गर्दै-गराउँदै छन् विभिन्न छ जाना अन्य विद्वान्-हरूको सहयोगमा।

साँच्चै हो, केही गरूँ भन्ने सोच भए गर्न नंसकिने केही रहेन छ।

●●●

देहरादूनको कवि-सम्मेलन भारतको साहित्य-अकादेमी र बी.पी. कोइराला भारत-नेपाल फाउण्डेशनको संयुक्त आयोजनामा सम्पन्न भएको थियो। द्विविसीय यस आयोजनामा भारतका हिन्दी र नेपाली कविहरूले सामेल भएर आफ्ना उत्कृष्ट कविताहरूको वाचन गरे। हिन्दीका कविहरू पद्मश्री विभूषित सुनीता जैन, रमेश सक्सेना र लीलाधर जगूड़ी र बुद्धिनाथ मिश्रले आफ्ना आफ्ना कविताहरू सुनाएर मुग्ध पारे। नेपालबाट आएका कविहरू उषा शेरचन, भुवन ढुङ्गाना, श्रवण मुकारूङ, धीरेन्द्र प्रेमर्षि र मञ्जुलका कविताहरूले पनि स्थानीय श्रोताहरूलाई लट्ठ पारे। नेपालबाट आएका समीक्षकद्वय डा. गोविन्द भट्टराई र डा. राजेन्द्र सुवेदीले नेपाली कविताको समीक्षात्मक टिप्पणी पेश गरे।

यस समारोहको यादगार विशेषता के रह्यो भने स्थानीय नेपाली श्रोताहरूको भव्य उपस्थिति। मेजरदेखि बिग्रेडियरसम्मका भूतपूर्व गोर्खा सैनिकहरूले नेपाली टोपीमा सजिएर दुवै दिन बेहान देखि बेलुकासम्म कविहरूको हौसला बढाइराखे।

●●●

लण्डनवासी हरिसिंह थापाका दुई कृतिहरूको विमोचन समारोहमा मलाई सभापति बनाइएको थियो। सम्भवतः कुनै समारोहको सभापति हुने यो मेरो पहिलो मौका थियो। त्यसैले म अलि संकुचित थिएँ।

समारोहमा गण्यमान्य व्यक्तिहरूमध्ये ओ.बी.ई.डा. राघव धिताल र कवि-गायक निर्देशक शम्भुजीत बाँस्कोटाले सिंहजीको व्यक्तित्व बारे प्रकाश पारे। डायस्पोराका प्रभावशाली व्यक्तित्व मध्ये सिंहजी पनि रहेछन्। उनको कृति 'सुन्तली' (उपन्यास) र 'गुराँस फुलेन' (कविता संग्रह) माथि सुप्रसिद्ध समालोचक कृष्णचन्द्रसिंह प्रधानले प्रकाश छरे।

दुवै कृतिहरूको समीक्षा 'उदय' का पाठकवृन्दले पछि पढ्न पाउनु हुने छ।

●●●

अन्तमा, महात्मा गाँधीका महान् वाणीहरूको नेपाली अनुवादको लोकार्पण समारोहको बारेमा।

देवतातुल्य भारतका राष्ट्रपिता महात्मा गाँधीको हरेक वाक्य नै महान्वाणीको रूपमा लिन सकिन्छ। नवजीवन ट्रष्ट अहमदाबाद (भारत) बाट प्रकाशित अंग्रेजी संस्करणको अनुवाद प्रस्तुत गरेर भट्टराईले नेपालीहरूका लागि ठूलो गुन लगाए। यस समारोहको विशेषता के रह्यो भने यसमा राजनैतिक, सामाजिक र साहित्यिक व्यक्तित्वका लगभग पचास जानाले महात्मा गाँधी संबंधी आ-आफ्नो विचार व्यक्त गरे। सभाको अध्यक्षता गर्दै कृष्णचन्द्र सिंह प्रधानले आफूले गांधीजीको वर्धा आश्रममा छँदा पाएको अनुभव सुनाए। मैले पनि गांधी संबंधित केही संस्मरण सुनाएँ।

यस लोकार्पण समारोहमा सबै वक्ताहरूले गाँधींजी को सत्य-अहिंसाको आदर्श बाटो रोज्नु पर्छ भन्ने मन्तव्य राखे।

तर उनको जन्मभूमि भारतमै गांधीले राखेको आदर्शहरूले प्रासंगिकता हराउँदै गएको बेला नेपालमा उनको महान् वाणी पढेर कतिले प्रेरणा पाउलान् यो हेर्ने कुरा हो। अस्तु।

## दुई मुक्तक

***माधव शर्मा नेपाल***

हड्डीमै रमाउने भुकुहरूलाई
मासु नै किन चाहियो र !
खासिपुकाले भरिपूर्ण सकुनीहरूलाई
तनखा नबढाएर के भो र !!
ए स्वामी भक्त भुकुहरूहो
खसी काट्ने मौसम आउँदैछ
हड्डीमात्रै सुँघाएर लठ्याउने हुन् कि
गन्धमिस्रित चौटा आफलेर
पुच्छर हल्लाउने पार्ने मात्र हुन्,
होसियार !

भुकु = भुस्याहा कुकुर खासिपुका = खाली शीशी पुरानो कागज.

# देवकोटा शतवार्षिकीका सन्दर्भमा
# गान्धी र दुई महान् कविद्वय
# लेखनाथ र लक्ष्मीप्रसाद

*डा. खेमनाथ कोइराला 'बन्धु'*

मैला धमिला खोला हजारौं जो आइपर्छन् ती सबै
सम्फेर साथै राखी उद्धरमा आफू अहो धमिलो नभै
उर्ली रहेको त्यो पूर्ण सागर कुन दिन्छ शिक्षा वास्तव ?
(लेखनाथ २००८:श्लोक ४०)

अहह अब कहाँ त्यो भारत श्री अकल्प (देवकोटा, युगवाणी, २००४)

**पृष्ठभूमि**

डॉ. गोविन्दराज भट्टराईले कान्तिपुर २०६५ कार्तिक २ मा 'विश्वविद्यालयका आँगनमा गान्धी' लेखे-मेरो आँसु खसेन। तीन दशक नाघे, यो गान्धी भवन २०२९ मा निर्मित भएको थियो। तर आज उपहास केन्द्रका सपना मात्र उपहास केन्द्र ! तैपनि ठडिएकै छ-अझै किन ढल्न नसकेको होला ?

विश्वभर अहिंसावादी महामानवको अहिंसा, सत्याग्रहको महत्व रहिरहेको छ। गान्धीको आजका स्मृतिका सन्दर्भमा म आज गान्धीका बारे लेखिएका दुई कृतिहरू चर्चा गर्न गइरहेको छु ती हुन् लेखनाथद्वारा लेखिएको **अमरसत्य स्मृति** र देवकोटाको **बापू**।

गान्धी सशक्त युगीन पुरुष थिए-जो विश्वमा आजसम्म सत्य, अहिंसा प्रवक्ताको रूपमा परिचित छन्।

विश्वभर अहिंसावादी, सत्यका प्रवक्ता महामानवको सम्झना भइरहेको छ।

भट्टराईले लेखे—विश्वविद्यालयको आँगनमा गान्धी भवन निर्माण भएको हो। आज तीन दशक पूर्वको यो भवन उपहासको केन्द्र बनेको छ। ढल्न लागेको छ, कसरी अझै ढल्न नसकेको होला ? भट्टराइले थपे—देशको विश्वविद्यालयको प्राङ्गणमा गान्धीको प्रतीक गान्धी भवनको गति यस्तो भएपछि नेपालले गान्धीको गीत गाउनु व्यर्थ छ। द्रवीभूत हुँदै उनी भन्छन्-नेपाल भारत सम्बन्धका सबै कुरा काल्पनिक गाथा लाग्दछ।

कान्तिपुर ०६५ कार्त्तिक २ को त्यो चित्र सहितको लेख पढेपछि मलाई लाग्यो, गान्धी उपहासको केन्द्र बनेकै हुन्, त म भन्छु–

तिमी भन्छौ लड्छ भवन
म भन्छु लड्दैन भवन,
गान्धी भवन
एक प्रतीक मात्र हो
गान्धी स्वयं विश्वभवन हुन्
जो कहिल्यै लड्दैनन्।
उनी विचार हुन्, दर्शन हुन्, चिन्तन हुन्
किनकि विचार कहिल्यै लड्दैन
दर्शन कहिल्यै मर्दैन
आस्था सधैं रहन्छ,
हो, भवनमा भूकम्प जाला
तर दर्शन, आस्था मजबूत रहन्छ
अनन्तसम्म फैलिइरहन्छ। (कोइराला, खेम २०६५, गान्धी दिवस)

गान्धी भवनको जगमा उभिएर डॉ. भट्टराईले प्रश्न उठाएका छन् गान्धीको नाममा खडा भएको भवन कतै ध्वस्त भएर नामोनिशान हुने त होइन ?

भट्टराईको यो आशंका मलाई शंका मात्र लाग्छ। गान्धीको मृत्यु भएको ६० वर्षपछि पनि गान्धीको विचार सशक्त छन्। गान्धी अमर छन्–विश्वभरका मानव मात्रका मन र मस्तिष्कमा छन्। यू.एन.ओ. अर्थात् विश्वसंस्थाले प्रत्येक वर्ष गान्धीको अमर स्मृतिमा शान्ति दिवसको जुन प्रस्ताव पास गरेको छ–त्यो आज पनि ताजै छ–अहिंसा, सत्यका रूपमा।

गान्धी बारबार सत्यपथमा अविचलित भएर उभिन्छन्! उनी बोल्छन्–सत्यले प्रत्येक मानवहृदयमा बास गर्छ। .......भारतले सत्यको बलिदानमा स्वतन्त्रता प्राप्त गर्नभुनन्दा बरु म चाहन्छु यो ध्वस्तै होस्।

विश्व स्तब्ध भयो, मर्माहत भयो। सारा शोकमा डुबे, कति आँसु झरे। विश्वभरकै स्रष्टा र चिन्तकले यी महामानवको आदर्श र गुणको गीत गाए।

सन् १९४८ जनवरी ३० बापूलाई सम्झेर महाकविले एक अमर 'शोक

**काव्य'** रचे । **बापू** अंग्रेजी भाषामा रचित यस्तो प्रथमसङ्ग्रह हो, जसले विश्वसाहित्यमै महत्वपूर्ण स्थान राख्तछ । तर पचासवटा सनेट (चौध हरफे कविता) **बापू** ती दिनमा छापिएन । कलकत्ताको एउटा प्रेसमा पुगेको पाण्डुलिपि हरायो, पछि कसरी कुन रूपमा प्राप्त भयो र मुद्रित भयो भन्ने कुरा **रामहरि जोशी**ले सङ्केत गेरका छन्, डॉ. **पद्मप्रसाद देवकोटा**ले विस्तारमा बताएका छन् ।

हाम्रा महाकविले ती महात्माको शोकमा कत्रो अमर गीत गाएका रहेछन्–आश्चर्य लाग्छ ।

शोक सम्पूर्ण नेपालीले अनुभूत गरेका र व्यक्त गर्न नसकेका वाणी र भावना हुन् । महाकवि झन् टङ्कारो सुनिन्छन् । त्यहाँ एक मानवतावादीले देखेका महात्मालाई कति उच्च प्रेम र श्रद्धाले हेरेका छन् । शक्तिशाली काव्यले बाँधेका छन् । समर्पित सनेट रच्ने उद्देश्य यसरी प्रष्ट पारेका छन्–म एक कवि हुँ आज सुनौला अक्षरमा अविनाशी शब्द लेख्न चाहन्छु, ती अक्षर जो बोल्न सकून् । **बापू**मा तिनै सुनौला अक्षर छन् । आज ती बोल्दैछन्, टल्किदैछन् । महाकविले लेखे–तिम्रो रक्तले यसको पवित्र नदीमा सम्पूर्ण विश्व कम्पित गरायो, यो विश्वकै सारा हृदय आँसुमा डुबायो, योभन्दा ठूलो प्रलय कहिल्यै आएको थिएन । ठूलाठूला व्यक्ति आज गम्भीर छन् किनभने सबैले आफ्ना पिता गुमाएका छन्, योभन्दा अँध्यारो दिन मानव जातिले कहिल्यै भोगेन होला ।

तिमीले मानवजातिलाई मुक्ति दिलायौ, आफैं विजयी, गौरवान्वित र सङ्लो भएर उभियौ । सधैं निर्भीक उभिएर सत्यको सामुन्ने मुस्कुराइरहने हे प्रमिथस ! अर्ध–बुद्ध ! तिमीले सारा सङ्घर्ष गरायौ ।

तिम्रा पितातुल्य अनुहारमा सुकरातीय सौन्दर्य भरिएको, तिम्रो साबरमती धर्म र दर्शनको जीवन्त पाठशाला थियो । हो महात्मा, कृष्ण नै सत्य हुन्, यो आत्मा भन्दछ, यो सबैको सर्वशक्तिमान आकर्षण हो । तिम्रो अहिंसा कुनै मृत कानून होइन, यो एक जीवन्त शक्ति हो ।

म जसरी आफ्ना देशवासीलाई प्रेम गर्दछु, त्यसै गरी म सारा मानवजातिलाई प्रेम गर्दछु, किनकि प्रत्येक मानवको हृदयमा ईश्वरको बास हुन्छ । महाकवि यिनै विश्वमानवतावादीको प्रार्थना र शोकमा थिए–उनी पनि ईश्वरवादी, विश्वमानवतावादी एक विराट चेतना थिए । बापू पढ्दा लाग्द–**अंग्रेजी भाषामा अझै पनि यति शक्तिशाली नेपाली कवित्व देखिएको छैन** ।

गान्धी र देवकोटाले आआफ्ना देशमा निरङ्कुशताविरुद्ध लडेका थिए, विचारले भावनाले, शब्दले, कर्मले ।

"महाकवि नेपाली साहित्यलाई विश्वतिर लैजान चाहन्थे । विश्वचेतना यता ल्याउन चाहन्थे । उनको तासकन्द वक्तव्य तिनै उच्च आकाङ्क्षातिर सङ्केत गर्दछ । आज पनि हामी महाकविले छोडेभन्दा धेरै टाढा पुग्न सकेका छैनौं । आधा शताब्दी बिते, उनैलाई रातोदिन सम्झिरहेछौं । आज महाकवि झन्झन् ठूला र विराट लाग्छन्, एक अनन्य भविष्य द्रष्टा लाग्छन् ।" **(गोविन्द भट्टराई, कान्तिपुर २०६५, कार्तिक ९)**

**देवकोटा र लेखनाथ**

देवकोटाको शतवार्षिकीको सन्दर्भमा देवकोटा र उनका अग्रज लेखनाथका निम्न कविताहरूको उद्धरणबाट गान्धीबारे यो लेख अघि बढाउँछु:-

**'अहह अब कहाँ त्यो भारत श्री अकल्प ?**

(देवकोटा, युगवाणी २००४)

देवकोटा गान्धीबारे अत्यन्त प्रभावित भएका छन् र उनी गान्धी सम्बन्ध आफ्नो उद्गार 'बापू' कवितामा व्यक्त गर्छन् :-

**'बापू' कविता**

Kohinoor of our Indian crown, O saintly man (page 3)
Bapu, our fathers are in Heaven (page 12)
In Bharat, purest land of God Suprime (page 13)
Non Violence is a force a working power
It is the souls direction to a land (page 16)
I'm the maker of the Heaven you know.
The race's Heaven to a holy law. (page 17)
Religion is the way to truth and good,
The way to universe good, the healing balm (page 10)
Teach me to child my child women my heart
weep as they weep, cry as they cry in pain (page 19)
work, work-it is not mean your work in life
work in your God......in labour dignity (page 21)
Humanity is beauty.......real pride
is low its meekness makes us truly great. (page 22)

गान्धीबारे कवि शिरोमणि लेखनाथ 'अमर ज्योतिको सत्य स्मृति' (प्रकाशन २००८ काव्य, लेखन २००४) लेख्छन्:-

सत्यानुरागी त्यो सत्यवादी तपसी सुगा नभमा उड्यो
निःस्वार्थ-सेवा-सिक्री पयरको दैवले बिचमा चुँड्यो
उसले कसैको जीर्णास्थिपिञ्जर गाम्भीर्य मुद्रा-मुद्रित
विडलाभवनमा श्री रामधुनमा भैगो कठै चिर नीद्रित

(श्लोक २२)

छीः छीः दूर्दूर पुण्य हो वा बन्धुत्व वैभव पूण्य हो ?
हे मान्य मानव ! आफैं त छुट्या कुन पूर्ण हो कुन शून्य हो ?

(श्लोक ३९)

आकाश रोयो नक्षत्र तारा रोए सबै पिलपिल गरी
रोयिन् धरित्री, रोयो हवा त्यो रोए दिशा र विभावरी
त्यो रोदनको छायाँ अँध्यारो पर्दा कठै यमुना पनी
बग्थिन् रुँदै झन् दिक्दार मानी मानुँ डबल मलिनी बनी ।

(श्लोक २३)

उस प्रेमको जो संसार भरमा व्यापक पनाकन जान्दछ
त्यो विश्वसेवा विश्वेशको नै सेवा भनीकन ठान्दछ
हे मान्य ! मानवपनाको यै हो मुटु वास्तव ।

(श्लोक ४४)

गोड्सेको यो दुस्साहसी संकीर्ण विचारप्रति लेखनाथ पौड्याल प्रतिवाद स्वरूप गान्धीको महानतालाई चित्रण गर्दै भन्छन्:-

अपशोच ! त्यस्तो कुन नीचता त्यो, कस्तो विकट दुर्भावना
कत्रो भयंकर धोखा दगा वा कस्तो अधम राक्षसपना
जुन घोर पापी राक्षसपनाले त्यस्तो पुरुषको छातीमा
गोली चलाई धब्बा लगायो सम्पूर्ण हिन्दू जातिमा

(श्लोक ८)

**श्रीराम, शंकर, बुद्ध भन् वा ईशा तँ भन् यद्वा खुदा**

**जो भन्दछस् भन् एकै छ ज्योति, बन्दैन त्यो कहिल्यै जुदा**

**(श्लोक १५)**

**त्यो साम्प्रदायिक त्यो राजनैतिक उग्र आर्थिक दोषले**

**दूषित गरेको तेरा मगजमा अच्छा जमायो जोशले**

**त्यसैले तलाईं निस्पट्ट अन्धो पागल बनायो वास्तव**

**(श्लोक २२)**

'यो लेखनाथको आध्यात्मिक नवोन्मेषको मानवतापूर्ण अभिव्यक्ति हो ।' (त्रिपाठी २०३४, पृ. २३०)

**उपसंहार**

कवि शिरोमणि लेखनाथ र महाकवि नेपाली काव्य परम्परामा आफ्नै पृष्ठभूमि बोकेका महान् व्यक्तिहरू युग पुरुष हुन् । यी दुबैले मान्यताका प्रतिक गान्धीका प्रति अमर श्रद्धाञ्जली दिएका छन् । अहिंसा वैशान्तिको प्राण हो । महात्मा गान्धी शान्तिका अनुपम प्रतीक हुन् । उनको जन्मदिवस अक्टोबर २ मा संयुक्त राष्ट्र संघले विश्वव्यापी रूपमा अहिंसा दिवस मनाइरहेको छ । अहिंसात्मक आन्दोलनले बेलायली साम्राज्यबाट भारत मुक्त भयो । गान्धीको महान् सिद्धान्तबारे अभिप्रेरित भएर नेपालीका दुई महान् कविहरूले गान्धी प्रति श्रद्धा अर्पण गरेको कुरा उल्लेख्य छ ।

## दुखेको देश

***उज्ज्वल बुङ्गेल 'दीप'***

आज मेरो छातीमा कता-कता देश दुख्यो
आँखा सामु संसारमा आजै मेरो शिर झुक्यो
दिनैपिच्छे घरी बाबु, घरी आमा मर्छन्
आफ्नै दैलोबाट दाई बहिनी बेपत्तामा पर्छन्
कति गर्ने हिंसा साथी ! अब भयो लौन पुग्यो
हिजो आज मेची, काली रगत बग्दै छ
रगत बग्ने ठाउँमा चाहिं आँसु बग्दै छ
रुआन्डाकै हाल भयो हैटीको रोग सऱ्यो ।

# नारायणी नदीका मगर

***स्व. गोपाल सिंह 'नेपाली'***

मगर हाम्रो मुलुकको नदी, ताल र झीलहरूको पानीको राजा हो। अफ्रिकाका नदी र झीलहरूमा एउटा अरू भयङ्कर जनावर पाइन्छ–पानी घोड़ा। त्यो मगरको काका अवश्य हो, तर हिन्दुस्तानमा पाइन्न। समुद्रहरूमा त एक से एक भयङ्कर जनावर छन्–अकटोपस, रार्कशर ह्वेल आदि माछा, जसको मगर जलपानसम्म पनि छैन। सेरको सवा सेर, सवाको अढाई सेर र अढाईको पाँच सेर त्यहीं पाइन्छ र सबैलाई खुल्लम खुल्ला छूट छ, कुनैले पनि कसैलाई हजम गर्न सक्छ। तर हाम्रो देशको धर्तीको पानीमा योनै शेरबब्बर मानिन्छ। यसले कसैलाई पनि पकडेर आफ्नो अफ्नो पेटभित्र हाल्नसक्छ प्रसिद्धनै छ जब गजंको पुकार सुनी स्वयं भगवान विष्णु दौडेर आएका थिए र उनले आफ्ना भक्तको ज्यान बचाएका थिए। यसै कथाबाट बुझ्नुहोस् कि मगर कत्तिको भयङ्कर जनावर हो! यसको अनेक थरिका जातिहरू हुन्छन्–गोही, घड़ियाल र मगर। तर, नाम मगरको नै धेरै प्रसिद्ध छ। भन्दछन्–'पानीभित्र रहेर मगरसित बैर?' 'र घडियालको आँसू' त व्यँग्य साहित्यको सम्पत्ति नै भइसकेको छ। यो पानीभित्र घण्टौं बस्न सक्छ र पानीदेखि बाहिर पनि। जसरी महाराणा प्रतापको तरवार लहरहरू लाई काट्दै अगाडि बढ्दै गइरहन्थ्यो, यो पनि त्यतिनै तेज पौडेर अगाडि बढ्छ। फूल (अण्डा) पार्नमा मगरनी संसारको रेकर्ड सदियौं पहिले तोडी सकेकी छ–३० हजारदेखि ९० हजारसम्म। मगरबारे मेरो जानकारी पहिलो पटक यस घटनाबाट शरू भएको थियो—मेरा बुवा एक पटक बेतिया राज (पश्चिम चम्पारण जिल्ला) को अङ्ग्रेज म्यानेजर संग मगरको शिकार गर्न जानुभो। त्यहाँ नारायणी नदी, बिहार राज्यको धेरै ठूलो नदीमा गनिन्थ्यो। यो त्यही नदी हो जसको पानीभित्र, सोनपुर नजिक गज-ग्राह युद्ध भएको थियो। यस नदीमा आज पनि यतिका मगर छन् कि त्यति मगर आसामको ब्रह्मपुत्र नदीमा भए होला, अरू नदीमा पाउन मुश्किल छ। नरकटियागंज, चम्पारणमा नारायणी नदीमा जुन पुल छ, त्यस माथिबाट गोली हानी मगरलाई मार्ने निश्चिय गरियो। पुलको तल...पानीको किनारमा मगर कोल्टो परी सुतिरहेको थियो। त्यो वास्तवमा घाम तापिरहेको थियो। तल गएर चलाखी गरी मार्न खोज्दा मगर हातबाट खुस्केला भन्न डर थियो। तसर्थ पुलमाथिबाट नै निशाना लगाइयो। अङ्ग्रेज म्यानेजरले गोलीरूको पर्रा छोडि चार-पाँच गोलीहरू बर्बाद गरिदिए, तर मगरको केही बिग्रेन। यसपछि पिताजीले मगरको टाउको माथि एउटै

गोली हानी त्यसको प्राणलीला सिध्याई दिनू भयो । त्यहींबाट मेरो उत्सुकत्ता शुरूभयो । फेरि शिकार साहित्यका प्रसिद्ध लेखक श्रीराम शर्मा र अनेकौं अङ्ग्रेज, हिन्दुस्तानी शिकारीहरूको रोमाञ्चकारी कथाहरू पढ्दा अरू पनि जानकारी हुन गयो । शर्माजीले लेखेका छन् कि अफ्रिकाको एक जना बेहुलाकी बेहुलीले नदीबाट पानी भर्दा एउटा मगरले त्यसलाई समाति लाग्यो । अनि बेहुला हातमा छुरालीइ नदीमा हाम्फाल्यो र आफ्ना बेहुलीको हत्यारालाई मारेर नै घर फर्क्यो । एक पटक उत्तर प्रदेशमा यमुना नदीको तीरमा पानी पिउँदा एउटा नाउलाई मगरले निले छ । दिन भरि मान्छेहरूको दाढी कपाल काटी नाउ साँझतिर घर फर्किरहेको थियो । त्यससित छुरा छँदै थियो, त्यसैले मगरको पेट चिरी नाउ महाराज राम्रैसित सछे बाहिर निस्क्यो । एउटा मुटु नै काम्ने अर्को कथा पढें कि उत्तर प्रदेशका एक जना जिमिदारको सात-आठ वर्षको छोरा घोड़ाको सवारी गर्नमा धेरै सिपालु भइसकेको थियो । एक दिन उसले आफ्नो घोड़ालाई पानी पियाउनका लागि नदीमा लग्यो । त्यो सानो घुड़सवार केटो लगाम समाति घोडा माथि नै बसिरह्यो । उता घोड़ा नदीभित्र पसी पानी पिउन थाल्यो । यस्तैमा एउटा मगरले झम्टी त्यस केटोको दाहिने खुट्टा आफ्नो मुखले समाति हाल्यो । केटोले घोड़ालाई घुमायो अनि आफ्नो घरतिर दौड़ाउन थाल्यो । केटो कराउँदै जान्थ्यो, घोड़ा पनि आतङ्कित भई जोडसंग भाग्दै गइरहेको थियो । तर, यति हुँदा पनि मगरले केटोको खुट्टा छोड़ेको थिएन । केटोले कराएका आवाज सुनेर जिमिदार साहेब गोली भरिएको बन्दूक हातमा ली बाहिर निस्के । घोड़ा उनको सामुन्ने गएर उभिएपछि जिमिदार साहबले नोकरहरू लाई हुकूम दिए—'मेरो छोरोलाई तल ओराल, मैले हेर्नें छु यस् बदमाश मगरलाई । कसरी यसले छोडदैन मेरो छोरालाई ! तर, नोकरहरूले केटोलाई घोड़ाबाट तल ओराल्ने बित्तिकै मगरले तेज़ीसाथ त्यस केटोलाई घिसार्दै नजिकको नदीभित्र पस्यो । जिमिदार साहेब हातमा बन्दूक ली उभिएका उभियै भए र उनको छोरा यमुना नदीभित्र हरायो । ठीक यस्तै अर्को कथा मुम्बईको चिडियाखानाभित्र घट्यो । एउटी आइमाई मगरको कठघरा माथिको पुलमाथि बसी आफ्नो दुई वर्षको छोरालाई हातमा ली तल पानीमा खेल्दै तीन-चारवटा मगरहरूलाई देखाईरहेकी थिई कि यतिकैमा छोरा हातबाट छुटेर मगरहरूमाथि खस्यो । आइमाइले कराएको सुनेर मान्छेहरू आउञ्जेल त्यसको छोरा मगरको पेटाभित्र पुग्यो । कति भयङ्कर हुन्छ ! तर, पेट भर्ने प्रश्न त्यसका लागि पनि यस जीवनको अमर प्रश्न हो । पानीमा चोर-डाँकू, साधु-समाज जुन-सुकै मान्छे पनि पस्छन् त्यसले कसैलाई पनि छोड्नेवाला होइन । एउटा अङ्ग्रेजी फिल्ममा पनि देखेका थिएँ—शेर बब्बर पेटभरि खाई पानी पिउनका लागि नदीको तीरमा पुगेको मात्र थियो कि मगरले त्यसको खुट्टा समात्यो । शेरले घरिघरि पञ्जाले त्यसलाई हानिरहेको थियो । तर त्यसको सबै वार पानीमाथि परिरहेको

थियो। मगर पानीभित्र लुकेर बसेको थियो तर त्यसले बाघको खुट्टा छोड़ेको थिएन। बाघ एकै छिनका लागि ढिलो के भएको थियो कि त्यसलाई मगरले यस्तो गरी तानेर लाग्यो, जस्री स्कूलका केटाहरू कतैबाट शील्ड जितेर ल्याउँछन्। गैंडा यस्तो बलियो हुन्छ कि गजराज र वनराज पनि त्यसदेखि दश माइल टाढा नै बस्न मन पराउँछन्। हवेली खड्गपुर (मुंगेर) का विद्वान जिमिदार श्री लालबाबूसंग मैले मगरलाई मूर्ख बनाएको कुरा पनि सुनेको छु। उनी भन्छन्–बाँदरले नदीको तीमा भएको रूखमा चढेर थाहा पाई हाल्छ कि मगर पानीभित्र कता लुकेको छ। फेरि रूखको सबैभन्दा तलको डालीमा आई उ मगरको आर्को पट्टी हामफाल्छ अनि पानीभित्रबाट बाहिर आउँछ। फेरि रूखमाथि चढेर ॐ-ॐ-ॐ भन्दै जिस्काउँछ। हाम्फाल्छ र फेरि बाहिर आउँछ। घण्टौंसम्म बाँदरले यस्तै गरिरहन्छ, तर मगरले त्यसलाई समात्न सक्दैन। लालबाबूले सयकडौं पटक यो तमाशा देखेका छन्। फैजाबादमा मगरको पिठ्युमाथि चढेर एउटा साधुलाई गंगा पारिदेखि वारितिर आइरहेको मुगल सम्राट् औरङ्गजेबले आफ्नै आँखाले देखेका थिए। आफ्ना संस्मरणमा उनले यस घटनाको जिकिर गरेका छन्।

मगरबारे मलाई यति नै थाहा थियो। एक दिन गोपालगन्ज (बिहारको सारण जिल्ला) बाट कवि सम्मेलनका लागि निम्ता आयो। बिहारको यसै जिल्लामा देशरत्न बाबू राजेन्द्र प्रसादको जन्मभूमि छ। मैले आफ्नो स्वीकृति त्यसै बेला पठाई दिएँ। मैले हिंड्ने निश्चय गरें। तर, ऐन मौकामा गाडी छुट्यो। गोपालगन्ज जाने त्यो अन्तिम ट्रेन थियो। अब म ठूलो सोच र पीरमा परें। ठूलो श्रद्धा गरी त्यहाँका मानिसहरूले मलाई बोलाए, सभापति बनाए, मैले आउँछु भन्ने तार पनि पढाई सकेको थिएँ। तर, अब त्यहाँ आज जाने बाटो बन्द! धेरै सोच्ने र विचार गर्ने समय नै थिएन। नारायण नदी पार गरी जाउँ भने बेतियादेखि गोपालगन्ज २०-२२ माइल टाढा छ। त्यसैले मैले नाउँमा चढी त्यो नदी पार गरें। जुन बेला म सम्मेलनको ठाउँमा पुगें, त्यस् समय त्यहाँ खलबली मच्चिएको थियो। हँसिलो वातावरणमा यसपछि कवि सम्मेलन सम्पन्न भयो। एका बिहानै म गोपालगन्जबाट फर्कें। गोपालगन्जबाट ७-८ माइल पर त्यो नदी पर्थ्यो। १०-१५ जना उत्साही विद्यार्थीहरू मलाई नाउमा बसाई फर्के र म घरको बाटोतिर लागें।

रातिको अँध्यारोबाट बिहानको उज्यालो चम्किरहेको थियो। उषाले मुसुक्क हाँस्न लागिसकेकी थिइन्। रातभरि नै बिछुड़िएका सारस र चकोरहरूको जोड़ा बालुवामाथि उभिएर एकदोस्रालाई माया गरिरहेका थिए। यी जोड़ाहरू रोमाञ्चकारी मसिनो स्वरमा कराउँदै चुच्चामा चुच्चा मिलाई रहेका थिए। कराएको यो स्वर अपार आनन्दको थियो। त्यसरी आनन्दमा विभोर भई उनीहरूले कराइरहेको आवाज मेरो कानमा अमर स्वर भई बस्न गयो। अहिले पनि मैले त्यसलाई बिर्सिन सकेको छैन। मगरहरूले

भरिएको त्यो नदी अहिले पूरा जवानीले भरिएको थियो। नाव पनिं माझीले डराई अगाडि चलाई रहेको थियो। के भन्न सकिन्छ र, कति हजार मगर पानीभित्र घुमिरहेका छन्। नाव पल्टियो कि बस कथा सिद्धिनेछ ! उसो त मगर देखिएका थिएनन्; तर भय चारैतिर व्याप्त थियो।

डराउँदा-डराउँदा हाम्रो नाव पारीपट्टि गएर घाटमा लाग्यो। त्यहाँ केही अर्कै चहल-पहल मच्चिएको थियो। नावबाट ओर्लेर मैले पत्ता लाउँदा एक जनाले मलाई भने कि मगरलाई समात्ने तयारी गरिंदै छ। 'के भन्दै छौ ?' 'मगरलाई समात्ने तयारी गरिंदै छ ? जुन मगरले गैंडालाई घिसारेर लइजान्छ, शेरलाई हजम गरिजान्छ र हात्तीको ज्यान छोड्दैन त्यसलाई तपाईंहरूले समात्ने ? विश्वास गर्ने कुरै थिएन। तसर्थ मनले भन्यो–घर छोड, काम धन्दा छोड़, सम्मेलनहरू छोड़ र भित्र पसेर तमाशा हेर। हेरूँ त के हुन्छ ? कसरी यिनीहरूले समात्छन् मगरलाई ? त्यस मगरको जातलाई जसलाई मार्नका निम्ति विष्णु भगवानले क्षीर सागरको शेषशय्याबाट दौड़ेर आउनु परेको थियो।

बिहारमा एउटा जाति छ जसलाई 'मुसहर' भन्छन्। यी मुसहरहरू धेरै जसो नदीको तीरमा बस्दछन्। तीरमा नबसे पनि त्यही जाने गर्दछन्। धन–सम्पत्ति छिटो कमाउन सक्दैनन्। तसर्थ माछा अथवा मगरमा जुन हात लाग्यो, त्यसैलाई समूह बनाई समात्दै हिंड्छन्। नाव चलाउन पनि इनीहरूलाई राम्रैसित आउँदछ। बीच नदीमा होस् अथवा तीर, नदी होस् अथवा झील, पौड़ी खेल्न इनीहरूलाई आउँदछ। जङ्गलमा मङ्गल गर्न इनीहरूलाई आउँदछ। हट्टा-कट्टा हुन्छन्। इनीहरूको शरीरमा असाध्य बल हुन्छ। कुनै कारणले रोकिनू परे पनि यिनीहरूले हार मान्दैनन्। सारा संसार भौतारिन्छिन् र दुःख सङ्कटमा पनि हाँसिरहन्छन्। त्यस् समय यिनीहरू नै मगर समात्ने आएका थिए। धर्तीमा अथवा जङ्गल-खेतरूहको कुरा भए पनि एउटा कुरा हुन्थ्यो। त्यति लामो, गहिरो र तेज धारा भएको नारायणी नदीमा मगर समात्न उनीहरू आएका थिए। मैले एउटा रूखमुनि आसन लगाएँ र चश्मा रूपी दूरबीनबाट तमाशा हेर्न थालें। मुसहरहरूले कसैबाट एउटा लामो र मोटो रस्सा लिएर आए। त्यस रस्सालाई एउटा रूखको फेदमा बाँधे अनि नदीको तरबरे लहरतिर हेंन थाले। उनीहरू उफ्रि-उफ्रिकन हेर्थे एक दोस्रासित सल्लाह पनि गर्दै जान्थे। मैले सोधें कि– 'भाइ, यो के गरिरहनु भा ? मगर छ पनि कि बिंनसित्तिको खोजी मात्रै भई रहेछ ?'

'वाह ! किन छैन, उ हेर्नोस्, टाढा....त्यस् लहरतिंर। एउटा लँगौटी लाएको बलियो मान्छेले हातको इशारा गर्दै भन्यो।

मैले आफ्नो चश्मा रूपी दूर्बिनले त्यता हेर्नें धेरै कोशिश गरें, तर मलाई त

केही पनि देखिएन। यदि पानीको प्रत्येक लहरको धारालाई, पानीभित्र उठ्ने प्रत्येक हलचललाई 'मगर' मात्रै हो भने त्यस समय नदीमा लाखौं मगर हुन सक्थे। मैले फेरि सोधें—'तपाईंहरूलाई त्यहाँ मगर देखिएको छ भने हुन सक्छ मगर नै होला। तर, त्यसलाई समात्छ कसले ?' 'मैले समात्ने छु।' भन्दै एक जना बलियो र फुर्त्तिलो युवक अगाडि आयो। त्यसको लँगौटी कसिएको र कम्मरमा एउटा ठूलो छुरा कोचिएको थियो। मुख हँसिलो थियो र आँखाहरूमा साहसको दियो झिलिमिलि-झिलिमिलि बलिरहेको थियो। त्यसले रूखको फेदमा बाँधिएको मोटो रस्सा हातले समात्यो अनि नदीको पानीतिर लम्कियो। एउटा मान्छेले मलाई भन्न लाग्यो—

'मगर पश्चिमतिर मुख गरी धाराको पानीमा चुप्प लागेर बसिरहेछ। त्यो सामुन्नेतिर देखा परी रहेछ। तसर्थ सामुन्नेतिरबाट नजिक गइयो भने त्यसलाई देखिहाल्ने छ। यसै कारण भोला पछाडितिरबाट गई रहेछ।' मैले देखें—भोला चुप्प लागेर रस्सा ली त्यतै पौडी खेल्दै गइरहेछ, जता मगर छ, भनेका थिए। भोलाको टाउको मात्रै देखिएको थियो, त्यो पनि कुनै-कुनै बेला। न कतै कुनै प्रकारको आवाज, आत्तुस न कुनै प्रकारको फिक्री। भोलाको शान त्यस् समय यस्तो थियो कि गुलाबको फूलटिप्न गइरहेको मान्छे जस्तो होस्! मैले सोधें—'कम से कम रस्सा बाँध्दा त त्यसले भोलालाई देख्ने छ। फेरि कसरी बाच्ने छ भोला ?' त्यो मान्छे अलि-अलि हाँस्यो। भन्न थाल्यो—'नजिक गएर डुबुल्की लाउने छ अनि मगरको पेटको तल केही बेर काउकुती लाउने छ र पुच्छरतिरबाट रस्सा फँसाएर बाँधिदिने छ। मगरले त्यसलाई देख्यो भने पनि भोलाको कम्मरमा लामो छूरा छँदै छ। त्यसैले मगरको काम तमाम गरिदिने छ। तर, पहिले मगरले काउकुतीको मीठो नशादेखि मुक्ति पाए पो त। तपाईंलाई थाहा छैन, मगरलाई पेटको तल काउकुती लाई दियो भने त्यसलाई असाध्य मज्जा आउँछ।' 'काउकुती लाइदियो भने असाध्य मज्जा आउँछ ?' म बिस्तारै कराएँ। म विचार गर्न थालें—भन्दछन् कि पानीमा बसेर मगरसंग बैर नगर्नू। तर, यता त पानीभित्र पसी मगरलाई काउकुती लाउने योजना थियो—अनि त्यसलाई काउकुती लगाई रस्सामा फसाउने। अहिलेसम्मका सबै मान्यताहरू कोल्टो परेर उल्टी रहेका थिए। हेरें त भोला मगरको १०-१५ पाइला नजिक पुगिसकेको थियो। हातले उसलाई इशारा गरियो कि मगर अहिले पनि त्यहीं छ। बढ्दै जाउ, बढ्दै जाउ।

भोलाले आखिरी डुबुल्की लगायो। आधा मिनेट मात्र भएको होला, त्यो अलिकति पनि देखिएको थिएन। मैले भनें—'कता गयो भोला ? डुबुल्की लगाई फेरि त्यो निस्किंदै निस्केन।' 'भोलाले पानीभित्र मगरलाई काउकुती लाईरहेछ।' कसैले जबाफ दियो 'काउकुती लाईरहेछ !' मेरो मन यस जादूले भरिएको चमत्कारलाई सत्य मान्न तयार भइरहेको थिएन कि यस्तैमा भोला तीरको नजिक नै पानीमाथि हाँस्दै

निस्क्यो। झम्टँदै बाहिर आयो। यस पछि मगर र तीरमा उभिएका मान्छेहरूमा रस्सा तानातान हुन थाल्यो। मगरले पानीतिर तान्थ्यो भने रस्सा गाछदेखि बाँधिएको थियो। र मान्छेहरूले तीरतिर तान्दा मगर नदीको तीरतिर तानिंदै आइरहेको थियो। केही बेरमा नै मगर पानीदेखि ब्राहिर तानियो; त्यसको कम्मरमा रस्सा राम्रोसित बाँधिएको थियो। कानबाट सुन्दा जुन कुरा ठट्टा जस्तो लाग्थ्यो, त्यो आँखा अगिल्तिरै सत्य देखियो। नदीको तीरमा मगरलाई ल्याउनसाथ त्यसमाथि बीसौं लट्ठी बर्सिन थालियो र लट्ठी खाई मगरको टाउको अस्पतालको बढारने झाडू जस्तै हुन गयो। सबै हाँसे र चारैतिर खल्बली मच्चियो। म यही सब विचार गर्दै घर फर्के कि जीवन एउटा शाश्वत संग्राम हो। कहिले मगरले कसैलाई निल्छ त कहिले मानिसले त्यसलाई बाँधी पानी बाहिर ल्याउँछ र त्यसलाई मूसालाई मारे जस्तो गरी मार्छ।

*प्रेषकः लवशर्मा 'प्रशांत'*
*पूर्वी चम्पारण (बिहार)*

यात्रा-संस्मरण

# पोखरा र मुक्तिनाथतिर

रूकु कार्की

कहिल्यै पनि मुक्तिनाथ जान नपाउदाँ मेरो मन धेरै उदास भइसकेको थियो। जीवन नै यात्रा हो, यात्रा नै जीवन। जीवनको हिँडाइमा कहिले छोटो, कहिले लामो यात्रामा गन्तव्य भिन्न हुन्छ, उद्देश्य भिन्न हन्छ। कान्छो छोरा रोशन कार्कीले हामी पाँच जनाका लागि टिकट खरिद गरी ल्याएर भन्यो—"भालि बिहान सात बजे बागडोल चोकको रिङरोडमा 'पोखरा ट्राभल्स' आइपुग्छ, तयारी रहनुहोला।"

यो भ्रमणको साइत यसरी जुरेको थियो। मुक्तिनाथ जाने योजना म र मेरा श्रीमान् राजेश कार्कीले बनाएका थियौं। यात्राको तयारीमा ठूलो छोरा रबिन कार्की, माहिला छोरा राजु कार्की, ठूली बुहाली रोबिना कार्की र हामी दुई जना सम्मिलित हुने भयौं।

त्यस दिन म अत्यन्तै उत्साहित थिएँ किनभने हिमाली भेगमा अवस्थित मुक्तिनाथको दर्शन गर्न पाँचदस वर्षदेखि प्रयास गर्दागर्दा बल्ल हामीलाई जुरेकाले हामी काठमाडौंबाट पोखरातर्फ प्रस्थान गर्न लागेका थियौं। नयाँ ठाउँको यात्रा गर्न पाउँदा खुसी लाग्नु स्वाभाविक हो।

बिहानी हुन लागिसकेको थियो। हामी हतारहतार आआफ्ना सामान लगेजमा राखी यात्राको तयारीमा लाग्यौं। हाम्रो यात्रा आरम्भ भयो—वर्षारम्भसँगै अर्थात् २०६६ जेठ महिनाको १२ गते। मुक्तिनाथ जाने पर्व भएकाले हामी सपरिवार हिमालय खण्डतिर यात्रामा लाग्यौं। निर्धारित सिटमा गएर बस्यौं, कतिपय यात्रीको सिट खालि नै थिए। कलङ्की चोक पुगेपछि चालकले यात्रुहरू खोजेर हैरान परे। बल्लबल्ल बसमा यात्रुहरू भरिएर समस्याको समाधान भयो।

बस बिस्तारै कलङ्कीबाट पोखरातर्फ लाग्यो। केही बेरमा बस तीव्र गतिमा दौडिन थाल्यो। बसको सिटमा आनन्दपूर्वक बसेर दायाँबायाँ हेर्नेबाहेक अरू कुनै काम थिएन। राजु, रबिन र रबिना अदम्य उत्साहमा थिए। घुम्न जान पाएकोमा खुसीको सीमा थिएन। खाना खाने बेला भएछ क्यारे, पश्चिमतर्फ हाँकिएको बस थानकोट नौबिसे, गजुरी, मलेखु, चरौंदी हुँदै, पहाडी शृङ्खलाको मुखमा रहेको 'डालीमा' होटेल अगाडि रोकियो। ड्राइभरले भने—"ल है खाना खानुहोस्।"

सबैका पेटमा भोकले मादल बजाइसकेको थियो। सबै यात्रु होटलभित्र प्रवेश गरे। हामीले असाध्यै मीठो मानी खाना खायौं। अलिकति बोल्न साहस आयो। सबैले खाना खाएर फेरि बस चढे। बसले आफ्नो गति लियो।

डुम्रेबाट अलि पर सडककै मुखमा भानुभक्तको जन्मथलो जाने बाटो रहेछ। मैले दृष्टि फ्याँकें। भानुभक्तको जन्मथलो जाने बाटो लेखिएको साइनबोर्ड देख्दा म हर्षविभोर भएँ। मैले आदिकवि भानुभक्तको बारेमा आफैंसँग कुरा गरें—नेपाली साहित्यको इतिहासमा सर्वश्रेष्ठ पुरुष आदिकवि भानुभक्त आचार्यको योगदान अतुलनीय छ। उनि नेपाली भाषासाहित्यको त्यो नाम हो जुन कहिल्यै बिर्सिंदैन। उनको निधन भएको सतासी वर्षपछि २०१० सालदेखि नेपालमा भानुजयन्ती मनाउन थालएको छ।

हामी भानुभक्तको सालिक तथा घाँसीको कुवाँलाई छोडेर बसमा गुडिरहेका थियौं। जुन जमानामा अर्कातिर लेखनाथले एउटा युगको चेतना हाँकेथे, नेपालीमा नयाँ भावना र जाँगरको बिजारोपन गरेथे। उनकै नामको नगरपालिकाभित्र पस्नासाथ लामा सेता दारी जुँगाले सुसज्जित सालिकमा मेरो नजर पऱ्यो। जसको सीप, कला र क्षमताले गण्डकीलाई अञ्चलमै अतुलनीय बनायो।

हामीलाई सकुशल दिनको दुई बजे पोखराको बस स्टपनेर पुगेपछि चालकले ओर्लन सूचना दिए। लेकसाइडको होटलमा हामीले पहिले नै कोठा बुक गराएका थियौं। हामीले होटेल मालिकलाई फोन गऱ्यौं, हाम्रो स्वागतका लागि होटेलकै मोटरगाडी तयार रहेछ। हामीलाई त्यहींबाट गाडी लिन आयो। हामी पाँच जनालाई लिएर मोटर फेवातालको किनार हुँदै लेकसाइड होटेलतिर हाँकियो। होटेलअगाडि पुगेर हामी सबै गाडीबाट ओर्लियौं र होटेलभित्र प्रवेश गऱ्यौं। होटेलमा पुगिसकेपछि, आआफना झोला कोठामा थन्क्यायौं। त्यतिखेरै मेरो श्रीमानको मोबाइलमा घन्टी बज्यो।

"हेलो, हेलो।" उहाँले फ़ोन उठाउनुभयो।

"सुषमा राणा।" कुनै नारी स्वरले झस्कायो।

"बुबाहजुर चिनिस्येन हजुरले ? म छोरी सुषमा बोलेको।"

"ए, चिनें नि।" उहाँले हाँस्दै भन्नुभयो।

"बुबाहजुर ! हजुर सबै परिवार मेरो घरमा सवारी होस्। हाम्रो सानो गेट टुगेदर सबैसँग भेटघाट पनि हुन्छ।" सुषमाले भनिन्।

"ज्वाइँका घर जाने होइन त?" उहाँले छोराबुहारी र मसँग अनुमति माग्नुभयो।

हामी सबैले अनुमति दिएर टाउको हल्लायौं—"ल हुन्छ।"

छोरी सुषमा राणा र ज्वाइँ प्रशान्त राणा कान्छा देवर शिव कार्की र देउरानी निशा कार्कीका ठूली छोरीज्वाइँ हुन्। म पनि आफ्नो छोरी नभएकीले सुषमालाई नै छोरी भनिरहेकी थिएँ।

एकछिनको विश्रामपछि हामी सबै छोरीज्वाइँका घर मोटरगाडीमा मिलिक्कै पुगिहाल्यौं। छोरीज्वाइँलगायत सम्धीसम्धिनीहरू हाम्रो स्वागतका लागि प्रतीक्षा गरी बसेका रहेछन्।

हामी माथि कोठामा गएर बस्यौं। एकछिन हाम्रो र उहाँहरूका बीच केही भलाकुसारी र अभिवादनको आदानप्रदान र चिनजान भयो। म पहिलोपल्ट सुषमाको घर पुगेकी थिएँ। सुषमाकी बहिनी सुमिना कार्की हेटौंडाबाट पोखरा आएकी रहिछिन्। उनीसँग पनि भेटघाट भयो।

छोरीहरू सुषमा र सुमिना कार्कीले पेयपदार्थ कोक, फेन्टा ल्याएर हाम्रो अगाडि टेबलमा राखिदिए। हामी कोकफेन्टा लिँदै सम्धिनीसँग गफियौं। हाम्रो परिवार एकछिनको लागि पाहुना भएर त्यहाँ जान पाउनु कम खुसी लागेन।

फेरि छोरीहरूले तरकारी, अचार, मासु र सेलरोटी ल्याएर टेबुल सजाइदिए। हामीले खान सुरु गर्‍यौं।

"अहो, कस्तो मीठो सेलरोटी। सुषमा छोरी ! यो सेलरोटी कसले पकाएको ?" मैले सोधैं।

"मुमाहजुरले पकाइबक्सेको।" सुषमाले भनिन्।

'साह्रै मीठो पो छ ममी।" रोबिनाले पनि भनिन्।

सम्धीसम्धिनीले हामीलाई गरेको स्वागतसत्कार र आत्मीयताले हामी साह्रै प्रभावित भयौं। बिदा हुने मन नहुँदानहुँदै पनि हामी हात हल्लाएर बाइबाइ गर्दै फर्कियौं। सडकका दायाँबायाँ रहेका हरिया फूलका बोटहरूले प्रत्येक आगन्तुकलाई स्वागत गरिरहेको थियो। पोखरी उत्तरतर्फ उभिएका माछापुछ्रे र अन्नपुर्ण हिमालमा चुचुरालाई हेरेर त्यसको परिचय दिइरहेको थियो। प्रभात र सन्ध्याकालको रातो किनारामा हेर्नें हो भने शिवापार्वतीको कैलाश प्रतिबिम्बित हुन्थ्यो।

पोखरा सहरको बाटोको अवस्था, विकासको रूपरेखा, मानिसमा आएको भौतिक परिवर्तन, जताततै चिल्ला सडक देख्दा हामी सबै भावमुग्ध भयौं। पोखरा भनेकै एउटा प्रमुख पर्यटन केन्द्रको रूपमा थियो। यात्राबाट केही न केही फाइदा हुन सक्ने कुरामा म विश्वस्त थिएँ।

हामी मोटरगाडी लिएर महेन्द्रगुफा अगाडि पुग्यौं र गुफाभित्र पस्यौं, हातमा टर्च लिएर गुफाको बीचमा पुगेपछि शिवपार्वतीको शिला हेर्‍यौं। म र रोबिना आत्तिएर

त्यसभन्दा माथि जान सकेनौं र फर्कियौं। गुफाको उत्तरी भागमा भित्रैबाट बाहिर जाने एउटा सानो प्वाल थियो। उनीहरू तीन बाबुछोरा दह्रो मुटु लिएर, हेर्दैमा कहालीलाग्ने कुण्डुरो प्वालबाट बाहिर निस्किए। कुनै नेपाली पर्यटकलाई गुहारेर हामी पाँचै जनाको फोटो पनि खिचायौं।

पोखराको विन्ध्यावासिनी, महेन्द्रपुल, महेन्द्रगुफा, पुग्ने काम एकै दिनमा भ्याइयो। पोखराको सराङ्कोट जुन बहुचर्चित र आकर्षित स्थल हो, तर त्यहाँ हामी पुग्न सकेनौं। फेरि हामी लेकसाइडको होटेलमा फर्कियौं। त्यहाँ पुगिसकेपछि पहिले नुवाइधुवाइ गरेर सबै जना ताजा भयौं। बेलुकाको खानापछि आरामका साथ कोठमा बस्यौं। दुइटा कोठामा पाँच जना बसे तापनि कोठा सुविधायुक्त नै थिए।

भोलिपल्ट बिहानै उठेर शौचक्रिया सकेपछि हातमुख धोई माछापुच्छ्रे र अन्नपूर्ण हिमालको दर्शन गरियो। माछापुच्छ्रे र अन्नपुर्ण हिमालका शृङ्खलाहरू हाँसिरहेका थिए। हिमालको चुचुरो देख्दा पूर्वतर्फको बादलको रातो किनारमा लुकेको जस्तो देखिन्थ्यो धाम। लेकसाइडबाट फेवाताल नजिकै थियो। कस्तो सुन्दर स्निग्ध, शान्त थियो फेवाताल। त्यस्तो दृश्यले सबैको मन तानिरहेको थियो। त्यसलाई हाम्रो आँखा र मनले छुन र अँगाल्न पुग्थे। फेवातालमा डुङ्गा चढेर छोराहरूको मन अघाएको थिएन।

राजु र रबिनले भनेका थिए—"आज पनि पोखरा बसौं न ? साँच्चै गर्व गर्न लायक प्राकृतिक सम्पदाको स्थल रहेछ, यहाँ यस्तो ठाँउमा घुम्न बाँकी नै छ।"

"आज त बिहानै जोमसोमको छ नि। बसन्त ऋतुमा राताम्मे गुराँस फुलेर डाँडै ढाकिएका देखिन्छन्। त्यतिखेर फेरि पोखरा घुम्न आउँला। मैले उनीहरूलाई आश्वस्त पारेर भनें।"

भोलिपल्ट बिहान सात बजे जोमसोमसम्मको टिकट थियो, नेपाल वायु सेवा निगमको। मुक्तिनाथ मन्दिरसम्म पोखराबाट जाने कार्यक्रम भएकाले हामी पोखरा सहरलाई छोड्दै एयरपोर्टतिर लाग्यौं। आकाशमुन्तिर देखिने हिमाल, पहाड र बस्तीहरू हेर्दै विमानमा उड्न पाइने भयो भनेर छोराहरू रबिन र राजु मन्त्रमुग्ध भएका थिए।

एकै छिनपछि हवाईजहाज उड्यो। धावनमार्गमा हवाईजहाज उडेदेखि नै झ्यालबाट बाहिर हेरें, हिमालका सेता चुचुराहरू टल्किरहेका थिए। जहाजभित्र बसिसकेपछि अचम्मसित बदलिन्छु म, गफ गर्न छाड्छु। एकअर्कासंग नबोली बस्छु। सन्त्रासले छाती ढुकढुक गर्न थाल्छ, छिनछिनमा झसङ्ग पनि हुन्छु। मन कहालिँदो, जहाजबाट जोमसोमभन्दा तलका गाउँहरू मार्फा, टुकुचे, कोबाङ, लेतेका डाँडाहरू देखिए। जोमसोम बजारको तल एयरपोर्टबाट दसबाह्र मिनेट मात्र लाग्ने रहेछ जोमसोम एयरपोर्टमा पुग्न। हामी आआफ्ना लगेज बोकेर माथि बजारमा पुग्यौं।

हाम्रो निम्ति जोमसोममा बस्ने र खाने ठाउँको समस्या थिएन। जोमसोममा बस्न

काठमाडौंबाटै लज बुक भइसकेको थियो। हामी आआफ्ना लगेज बोकेर एभरेस्ट लजभित्र प्रवेश गयौं।

लजमालिक वचनका पक्का रहेछन्। त्यहाँ पुगेपछि उनले हामीलाई आदरपूर्वक आफ्नो अतिथिकक्षमा लिएर गए र भित्र सोफामा बसाउँदै सत्कार गरे।

"जोमसोम पनि सोचे भन्दा रमाइलो ठाउँ रहेछ। कति सफा र चिसो ठाउँ ? हामी त निकै टाढा पो आइपुगेछौं हगि ?" रबिनले भने।

"तर यो ठाउँ त्यति टाढा होइन रबिन दाइ ! हामी योभन्दा टाढाटाढा सात समुद्रपारि अमेरिकादेखि यात्रा गर्न आएकालाई यो पनि टाढा हो र !" राजुले आफ्नो धारणा राखे।

पहिले जोमसोमलाई कुम्साङ भन्ने गरिन्थ्यो रे, पछि जोमसोम हुन गयो भनिन्छ। यहाँ अड्डा-अदालत, सरकारी कार्यालय, विद्यालय, बैङ्क, होटल लजहरू छन्।

हामी पाँच जनाको टोलीलाई जोमसोमबाट मुक्तिनाथसम्म पुऱ्याउने र ल्याउने जिम्मा लज मालिकको थियो। लज मालिकले हामीलाई गाइड गर्न जनकपुरका क्षेत्री बाहुनजस्ता लाग्ने एक जना युवकलाई खटाए। ती युवकलाई देखेपछि मेरो मन पनि ढुक्क भएको थियो।

लज मालिकले भने—"मेरो जिप छ, त्यसैमा यही केटाले तपाईंहरूलाई पुऱ्याउने र ल्याउने काम गर्छ। उनको माग साढे चार हजार रूपैयाँ थियो। त्यहाँबाट हामी आफूखुसी जान पाएको भए जम्मा १५ सयले पुग्ने रहेछ। त्यो कुरा हामीलाई पहिलो नै थाहा भएन। रकम निकै नै बढी पऱ्यो। यस्तो अर्काको ठाउँमा केही बोल्ने कुरै भएन। सम्पूर्ण कुराको जिम्मा लज मालिकलाई नै सुम्पिएको थियो।

हाम्रा ब्यागहरू आआफ्ना कोठाहरूमा राख्न लगाई उनीहरूले भनेको मोटरगाडीमा हामीलाई मुक्तिनाथ लिएर गए। त्यो गाइड गर्ने युवकले हामीलाई केही गर्ने त होइन भन्ने सन्त्रासले पनि मेरो मुटु ढुकढुक भएको थियो। त्यो केटो भनिरहेको थियो—"हाम्रो काम नै स्वदेशी तथा विदेशी पाहुनाहरूलाई यहाँबाट माथि मुक्तिनाथसम्म पुऱ्याउने र मुक्तिनाथबाट तल जोमसोमसम्म ल्याई परिश्रमको मजदुरी लिने हो। तपाईंहरूजस्तै कति विदेशी पर्यटकहरूलाई लिएर हिंडेको छु भनेर साध्य छैन। कोही विदेशीहरू त गाडी र घोडा चढ्नै मान्दैनन्। उनीहरूसँगै हिंडेर मुक्तिनाथसम्म पुग्नै पर्छ। फेरि फर्किंदा पनि हिंडेरै आउनुपर्छ। युवकको इमानदार र निर्दोष कुरा सुनेर मलाई दया पनि लागेर आयो।

हामी चढेको जिप लगातार आफ्नो गतिमा हिंडिरहेको थियो। सडकछेउमा

हिमाली जडीबुटी फिंजाएर बेच्न राखेका देखिए। नीरमसी, चिची, तोरा, जिम्बुजस्ता वस्तुहरूका लागि यो ठाउँ महत्त्वपूर्ण स्रोत मानिंदो रहेछ। उनीका वस्तु, राडी, गलैंचा, मुगाका लुगा आदि बेच्न बसेका स्थानीय थकालिहरू देखिन्थे।

जोमसोमबाट कालीनदीको तीरैतिर मोटर चढेर उत्तरतर्फ लाग्छौं। यो बगरमा चिल्ला, काला, सेता, फुस्रा रङका शालिग्राम नदी वेगका साथ गर्जन गर्दै हुत्तिएको थियो। जुन हेर्दा यात्रीहरूको आङै सिरिङ्ग हुन्थ्यो। बाटो नदीको किनारैकिनार थियो। काली नदीको तीरैतिर जाँदा कहीं उकालो, कहीं ओरालो, कहीं सम्म, कतै घुमाउने हुँदै पुगियो कागबेनी। कागबेनीबाट पारिपटि काग गाउँ तरेपछि दुइटा बाटा भेटिए, एउटा मुक्तिनाथतिर र अर्को मुस्ताङतर्फ लाग्ने। एकातिर नदी र अर्कोतिर बाटो, काग खोलाको सङ्गमस्थल रहेछ कागबेनी।

वरपर धुपीका ससाना बुटाबाहेक नाङ्गो पहाडमा केही सेता र पहेंला भुइँकिरी फूल र काँडे झार देखिए। कतै घाँसे मैदानहरू, कतै मरुभूमिकैं लाग्ने ठाँउ, कतै खोंच, कतै पहाड, कतै कुन्डिएका पहाड अनौठो दृश्य एकातिर थियो भने, अर्कोतिर पत्रैपत्रझैं लाग्ने पहाडहरू उक्लदैं जाँदा चारैतर्फ हिमालले घेरिएकैं लाग्थ्यो। प्रकृतिको यो चमत्कार सबै यात्रुका लागि आकर्षक केन्द्र बन्न पुगेको थियो।

बेलाबेलामा भारी बोकेका घोडा, खच्चरहरू, घाँटीमा बाँधिएको घन्टी बजाउँदै हिंडिरहेका देखिन्थे। यात्रा गर्दै जाँदा ढुकुर, मलेवा, परेवा र च्याँखुराहरूले पनि ठाउँठाउँमा स्वागत गरे। घरपालुवा जनावरका रूपमा पालिएका घोडा, खच्चर, गधा, भेडा, च्याङ्ग्रा र याकहरू बाटोमा जतातते समूह-समूहमा भेटिए। कतैकतै बथान मिलेको ललु गाई पनि देखिए।

अग्लाअग्ला डाँडाका बीच बाटोमा हिड्दा जोकोही तीर्थालुलाई लखेट्दो रहेछ हिमाली हावाले। त्यसपछि नागबेली बाटो भएर अघि बढ्न थाल्यौं। कतै हरियाली कतै सुक्खा, कतै चोसोमोसो, नाङ्गो पाहाडका चुचुराहरू हेर्दै प्रकृतिसँग लुकामारी खेल्दै हामी अघि बढ्दै गयौं। आफैं हिमालकी छोरी भएर पनि घनघोर तिर्खाले गाँजेको रहेछ मलाई। म, फेरि दायाँबायाँतर्फ नियाल्न थालें। मैले सोचेभन्दा रमाइलो र मनमोहक लाग्ने दृश्यहरू टाँसिए आँखाभरि। प्रकृतिको वरदान मानिने ठाउँ, जति उकालो चढ्दै गयो, उति सौन्दर्यका दृश्य आँखासामुन्ने लोभ्याउन आइरहेथे।

कारकोटसम्म खासै अप्ठ्यारो बाटो थिएन। कारकोट नजिकै सयौं, हजारौं भेडाका बथान चरिरहेका थिए। गोठालाहरू शेर्पा, गुरुङ, मगरहरू जस्तो लाग्यो मलाई। भेडाहरू माथिमाथिसम्म पुगेर पोथ्रापोथ्रा घाँसे पाखामा चरिरहेका थिए।

विदेशी तथा स्वदेशी पाहुनाहरू हिमाली दृश्यका भोका नै रहेछन् भन्ने आभास

भयो। उनीहरूको आवतजावतले बाटोभरि घुइँचो थियो। उनीहरू हिमाली भेक र सूर्योदयको दृश्य देखेर 'ओहो, आहा' भन्दै अचम्मैसँग रमाइरहेका थिए। हिमाल र पहाडको टाकुरासुँग साक्षात्कार गर्न खोजिरहेका थिए।

मुक्तिनाथसम्म जिप लान नमिल्ने रहेछ। उनीहरूको अनुमति त्यही अलि परसम्म रहेछ। मुक्तिनाथसम्म हिँडेर जान नसक्ने आगन्तुकलाई मोटरसाइकल र घोडाको व्यवस्था पनि रहेछ। कोही मोटरसाइकलमा चढेर जाँदै थिए भने कोही घोडामा, कोही पैदल नै हिंडेर गइरहेका थिए। हामी मोटरगाडी छोडेर चिसो हावामा कक्रिंदै र अररिंदै, ढुङ्ग्यान् बाटो र डरलाग्दो ढुङ्गे सिँढी र खुड्किलाहरू पार गर्दै हिँडिरह्यौं। तलैबाट मुक्तिनाथ मन्दिरको थुम्को देखियो। डाँडाको टुप्पोमा रहेछ मन्दिर। अन्तिम विन्दु मुक्तिनाथ पुग्न ठूलै साहस बटुल्नुपर्‍यो। हामी एउटा सुन्दर प्रकृतिको शिखर चुम्न लागिरहेका थियौं। चिसो स्याउले एकनास हानिरहेको थियो। हिमाली आवाज निकालेर शिखरलाई ढल्पाउन खोज्दै थियो। मुक्तिनाथ क्षेत्रको तीव्र हावाको झोंक्काले आक्रस्त हुन्छौं भने अर्कोतिर अग्लो स्थलबाट चारैतिर हेर्दा बडो रमाइलो अनुभुति भयो। अग्लो ठाँउको हेराइले स्वयम्भूको झल्को पनि दिलायो। मुक्तिनाथ मन्दिर पुग्नुअघि लज, होटेल, पाटी, पौवा सबैको व्यवस्था भएको ठाँउ देखिए। हामी निकै खुडकिला चढेर मन्दिरतर्फ लाग्यौं।

३८०० मिटरको उचाइमा रहेको मुक्तिनाथ मन्दिरभित्र पस्तै हामीले अभिवादन गर्‍यौं। मन्दिरको ठीक पछाडि १०८ नुहाउने धारा रहेछन्। हामी धारानजिकै बेन्चीमा गएर थचक्क बस्यौं। त्यहाँ पुग्दा हामी थकाइले लखतरान भइसकेका थियौं। धारामा सफा, स्वच्छ, स्वच्छ पानी झरिरहेको थियो। पहिला म र श्रीमान् कपडा खोलेर १०८ धारामा गई स्नान गर्‍यौं। नुहाउने बेलामा पनि ठूलो पानी पर्लाजस्तो भयो, तर सिमसिमे पानी मात्र परिरह्यो। १०८ धारामा स्नान गर्न पाउँदा मन हर्कले भरिएको थियो। वास्तवमा हामी दुवैलाई मनभरिमा पीर, व्यथा र थकानहरूका विस्मृत भइरहेथ्यो, भने अर्कोतिर जीवनको आनन्द र रमाइलो अनुभुति भइरहेथ्यो। हामी बूढाबूढी दुइटा कुण्डमा गर 'जय मुक्तिनाथ' भन्दै तीनफेर घुम्यौं। छोरा रबिन र बुहारी रोबिनाले क्यामेराको लेन्स मिलाएर १०८ धारा र दुइटा कुण्डलाई क्लिकक्लिक पार्दै क्यामेरामा ताने।

फेरि त्यसैगरी रबिन, राजु र रोबिना १०८ धारामा नुहाई कुण्डमा नुहाउन गए। उनीहरूलाई पनि हामीले १०८ धारा र कुण्डलाई लक्षित गर्दै फोटो खिच्न लेन्स मिलाएर फोटो कैद गर्‍यौं। १०८ धाराबाट झरेको निर्मल पानीमा नुहाउँदा र पानी खाँदा पूरै शरीरमा नयाँ शक्ति प्राप्त आएझैं शरीर पूरै हलुका भयो। फोटो खिच्ने, हेर्ने, रमाउने र बसेर आराम गर्नेहरूको सङ्ख्या नै अनगिन्ति थियो।

बाह्र बज्यो, हामीले स्नान गरिसकेर चोखो र नयाँ कपडा फेर्‍यौं। हामी पाँच

जना पङ्क्तिबद्ध भएर मुक्तिनाथ मन्दिरभित्र प्रवेश गरी विशेष पूजा गऱ्यौं। हामीले फूल, अक्षता, भेटी, वस्त्र, धुप, नरिवल र बेलपत्र हातमा लिई पूजाअर्चना गऱ्यौं। चढाइएका फूल, प्रसाद र नविल फोरेर पुजारीले हामीलाई प्रसाद दिए। मन्दिर परिसरभित्र निक्कै घुँइचो बढिरहेको थियो।

मन्दिरभित्र भगवान् विष्णुको मूर्ति राखिएको रहेछ। मूर्तिका दुईतिर दुई नारी शक्ति बरदायिनीका मूर्ति रहेछन्। भगवान् विष्णुको मूर्ति बीचमा, बायाँ लक्ष्मी, दायाँ सरस्वती, गरुड र गणेश गरी ६ वटा मुर्ति रहेछन्। ती मूर्ति सुन्दर लाग्छन्। पूजाअर्चना सकेर हामी त्यहाँबाट करिब पचास मिटर तल ओर्ल्यौं र तेर्सो बाटो लाग्छौं। एकछिन हिड्यौं र ज्वालामाइको मन्दिरभित्र प्रवेश गऱ्यौं। ज्वालादेवीभित्र हेर्दा जमिनबाट आगोको ज्वाला पानीबाट निस्केको चटचट आवाज सुनिन्थ्यो। त्यहाँबाट नियालेर हेर्दा आगोको बलिरहेको लप्का निस्कीरहेको थियो। कस्तो प्रकृतिको शक्ति होला ? आगोको लप्का देखेर म त तीनछक्क परें।

यात्रामा आराम, भोजन, औषधि सबै कुीको बन्दोबस्त थियो। अब हामीलाई केही हतार थिएन। हाम्रो मूल उद्देश्य पूर्ण भइसकेको थियो। हिन्दूहरूको कतिपय तीर्थस्थल हिमाली क्षेत्रमा रहेका छन् भने कुनै दुर्गम पहाडी क्षेत्रमा पनि छन्। मुक्तिनाथ मन्दिर मानवसभ्यताको महत्त्वपुर्ण तीर्थस्थल मानिन्छ। नेपालको इतिहासमा सांस्कृतिक केन्द्रको उद्‌गमंस्थलको रूपमा पनि प्रसिद्ध छ मुक्तिनाथ।

स्वस्थानी कथाअनुसार प्राचीन युगमा भगवान विष्णुले जालन्धर नभएको मौका पारी, जालन्धरको भेष बदली बृन्दाको अस्मिता हरण गरिदिए। उनी पतिव्रता थिइन विष्णुलाई शालिग्राम भइरहन परोस् भन्ने श्राप दिएकी हुँदा त्यसको प्रभावले विष्णु भगवान् शालिग्राम बनी लोकबाट पूजा अर्चना पाई बसेका छन् भन्ने विश्वास गरिन्छ। सो कुरा ब्रह्माजीले थाहा पाई अग्निको ज्वाला पैदा गरी विष्णुलाई मुक्ति दिलाएर स्वर्गमा लगेकाले यो ठाउँलाई मुक्तिक्षेत्र र मन्दिर भएका ठाउँलाई मुक्तिनाथ भनिएको हो अरे। अर्को कथनअनुसार प्राचीन युगमा सप्तऋषिहरू तपस्या गर्न मुक्तिक्षेत्रमा आएका थिए। नदीछेउमा सप्तऋषिले स्नान, तपस्या, पितृपिण्ड, तर्पण आदि गरेकाले आज पनि विश्वास गरेर पितृलाई पिण्ड, तर्पण, श्राद्ध आदि गरिन्छ। त्यसैले यस क्षेत्रलाई मुक्तिक्षेत्र भनियो।

बराह पुराणअनुसार यस क्षेत्रमा अनेकौं ऋषिमुनिले तपस्या गर्दागर्दै मुक्ति पाएको हुनाले पनि यस क्षेत्रलाई मुक्तिक्षेत्र भने मर्त्यलोकमा प्रसिद्ध हुन गयो भनिन्छ।

*काठमाडौं*

व्यङ्ग्य

# डरको हाउगुजी

कृष्ण प्रधान

कुनै भयङ्कर वस्तु देखेर वा खराबीको आशङ्काले मनमा उत्पन्न हुने भाव, त्रास वा भयलाई डर भनिन्छ। यो संसारमा ठ्याम्मै नडराउने विरलाकोटि पाइएलान्। यद्यपि कसैले 'मलाई पटक्कै डर लाग्दैन' वा 'म कसैसित डराउँदै डराउँदिनँ' भन्छन् भने यो संसारमा उजस्तो महाडरछेरुवा वा काँतर अरु कोही हुँदैन। आफ्नो डरछेरुवापन छोप्न लुकाउनलाई उनले लाएको यो हाँक मात्रै हो। यसकारण सबै डराउँछन्, डर सबैलाई लाग्छ। कोही लोग्ने स्वास्नीसित डराउँछन्, कोही स्वास्नी लोग्नेसित। लोग्ने-स्वास्नीको कुरा निस्किहाल्यो। स्वास्नीसित नडाउने वीर लोग्ने यो संसारमा शायदै होलान्। यस विषयमा एउटा कथा यहाँ राख्न मन लाग्यो। एकजना राजाले अचानक एउटा घोषणापत्र जारी गरेर राज्यभरि वितरण गरे। घोषणापत्रमा लेखिएको थियो—'स्वास्नीसित पटक्कै नडराउनेहरू अनि स्वास्नीसित डराउने मेरा राज्यभरिका लोग्नेहरू आउँदो आइतबारको दिन दिउँसो मेरो महल परिसरमा उपस्थित हुनुपर्ने सुचित गरिन्छ।'

राजाको आदेश शिरोपर गर्दै राज्यभरिका तमाम् लोग्नेहरू उपस्थित भए राजमहल परिसरमा। समवेत् लोग्नेहरूलाई सम्बोधन गर्दै राजाले आफ्नो आदेश घोषणा गरे– 'आफ्नी स्वास्नीसित डराउनेहरू एक पंक्तिमा अनि नडराउने लोग्नेहरू अर्को पंक्तिमा उभिनु।'

अचम्भ के भयो भने, उपस्थित लोग्नेहरूमध्ये मात्रै एकजना लोग्नेलाई स्वास्नीसित नडराउने लोग्नेको पंक्तिमा उभिएको देखियो। राजा छक्कै परे। राजा स्वयं पनि स्वास्नीसित डराउने हुनाले स्वास्नीसित नडराउने लहरमा उभिएका ती लोग्नेलाई साँच्चै वीर पुरुष ठाने। स्वास्नीसित डराउने, छुलछुल हुने, थुरथुर हुने राजाकै राज्यमा स्वास्नीसित नडराउने वीर पुरुषलाई आफू समक्ष बोलाएर बाहुपाशमा कसे। स्नास्नीसित नडराउने लहरमा एकैजना डराउने सबै लोग्नेहरूलाई राजाले आ-आफ्नो घर जाने आदेश दिए पनि स्वास्नीसित नडराउने ती लोग्नेलाई राजमहलमा लगे। उनको उचित सम्मान गर्दै राजाले भने–'हे वीर पुरुष! साँच्चै तिमीजस्ता प्रजासामु म श्रद्धाले नतमस्तक छु। आफ्नी स्वास्नीसित नडराउने तिमी मभन्दा पनि महान् रहेछौ। तिमीलाई म सुन-चाँदी उपहारस्वरूप प्रदान गरेर वीर लोग्नेको सम्मान गर्न चाहन्छु। स्वास्नीसित

नडराउने लहरमा बसेर तिमीले मजस्ता वीर राजालाई लज्जित बनायौ। स्वास्नीसित डराउने र नडराउने लहरमा उभिनु परेको भए मैपनि डराउने लहरमै उभिने थिएँ। स्वास्नीसित नडराउने खास रहस्य तिमीले मलाई बताउनुपर्छ ताकि म पनि तिम्रो बिँड़ो थामेर वीरपतिको रूपमा आफूलाई स्थापित गर्नु सकुँ।

ती व्यक्तिले मुन्टो निहुराएर मलिन स्वरमा भने-"महाराज! तपाईंको आदेश पाएर यहाँ आउने बेलामा मेरी स्वास्नीले मलाई औंली ठड्याउँदै भनेकी थिइन्....लाखेस्! जुन लहरमा धेर मानिसहरू उभिन्छन् त्यस पंक्तिमा नउभिएर तपाईं अलग्गै एक्लै उभिनु।' मलाई ता स्वास्नीसित डराउने लहरमै उभिनु मन लागेको थियो। त्यस लहरमा उभिएको कथङ्कल मेरी स्वास्नीले सुइँको पाइन् भने घरमा हुँड़ीबिड़ी मच्याउनु मात्र होइन मलाई उठीवास लाउनेछिन् भन्ने डरले म स्वास्नीसित नडराउने लोग्नेको लहरमा उभिएको मात्रै हुँ।"

ती मान्छेको कुरा सुनेर राजा बिलखबन्द परे र मनमनै भने-ए! तिमी पनि त्यै ड्याङ्कै मूला पो रहेछौ मोरो। स्वास्नीकै डरले पो तिमी स्वास्नीसित नडराउने लोग्नेको लहरमा उभिएको रहेछौ।

ती स्वास्नीकातर लोग्नेप्रजालाई स्वास्नीकातर राजाले के गरे त्यसपछिको कथा मलाई थाहा नभए पनि हरेक लोग्नेहरू स्वास्नीसित डराउँदा रहेछन् भन्ने कुरो मलाई स्पष्ट भयो। मलाई पनि तपाईंले त्यै ड्याङ्का मूला ठान्नुहुन्छ होला। तर मेरो कथा बेग्लै छ। मस्त भएर लेखिरहेको बेला मेरो सानो छोरो कृतज्ञ मेरो छेउमा आएर मलाई च्याप्पै अङ्गालो हामी मेरो गालामा च्वाक्क-च्वाक्क म्वाइँ खाएर सोध्यो-'बुवा! तपाईंलाई डर लाग्छ?'

"लाग्दैन!"

—ः ईं कहिल्यै पनि डराउनु भएन?

अहँ.....

तपाईंलाई बाघसित पनि डर लाग्दैन?

बाघ, भालु केहीसित पनि डर लाग्दैन मलाई।

मेरी मुमासित?

मुमासित ता झन् डर लाग्दैन मलाई।

आश्चर्यचकित भएर त्यसले भन्यो-आम्बो!

त्यसलाई अरु बोल्न नदिई सोधें-तिम्री मुमासित म डराउँदिनँ भन्दा आम्बो पो भन्यौ ता बाबु!

मलाई ता मेरी मुमासित कस्तो डर लाग्छ नि.....तपाईंलाई साँच्चै कसैसित डर लाग्दैन बुवा ?

अहँ.....

प्रोमिस ?

प्रोमिस। मलाई कसैसित डर लाग्दैन।

भित्रबाट श्रीमतीको चर्को स्वर मेरो रिडिङ रुपमा प्रतिध्वनित भयो "कृतज्ञ.....बुवालाई फेरि डिस्टर्ब गर्दैछस् ?"

मुमाको स्वर सुन्ने बित्तिकै त्यसले मलाई फेरि एकपल्ट मेरा दुवै गालामा म्वाइँ खाएर लुरुलुरु भित्र पस्यो। तर मैले मेरा छोरो कृतज्ञलाई हाकाहाकी ढाँटें....रुपियाँमा सोह्रै आना ढाँटें। संसारमा नडराउने मानिस को होला र! यो संसारमा विभिन्न प्रकारका डरहरू छन्। तर मैले डरको व्याख्यखा गरेर मेरो बालाख छोरोको बालसुलभ हृदयलाई कातर बनाउने प्रयास गरिनँ। तर छोरोको प्रश्नले मलाई मेरो शैशवकालको झल्झल्ती सम्झना गरायो। छुट्टीको दिन थियो शायद मेरी मुमाले भनिन्-आज उपद्रो नगर् है नानी! आज बुवा घरमै छन् नि!

हो पनि, बुवा घरमा हुँदा बुवाको डरले म घरभित्र श्वाश न वास भएर बस्थें। बुवा घरमा नहुँदा साँच्चै मैले बाँदरको भूमिका पालन गर्थें भन्ने कुरा अहिलो पो बुझ्दैछु। पेन्सिलले देक्ची वा थालमाथि ड्रम बजाएर आमाको कान खान खान मात्र होइन छिमेकीसमेतको कान खाने पुत्र मै नै हुँ। कि ता घरभित्रै फुटबल खेली ताकका गिलास-थालहरू झारिदिने पनि मैं हुँ। स्कूलमा पनि उही गति। उपद्रोका राजा म। सर क्लासभित्र पस्दा फेरि एकदम लाटो सद्दे भएर बसिदिने विद्यार्थी म। पिरियड अफ् भएर सर बाहिर निस्किने बित्तिकै मभित्रको बाँदरप्रवृत्ति जागिहाल्ने। तर एकदिन पक्रा परें म। मेरो कान निमोठ्दै रवीन सर गर्जे - बेञ्चीमाथि घूँडा टेक्। दुई हातले कान समात्। आज यसको टिफिन बन्द।

सर बाहिर निस्केपछि फेरि जस्ताको तस्तै। रवीन सरको डरभन्दा पनि परीक्षाको डर गजबको थियो। त्योभन्दा पनि धेर डर रिजल्टको दिन। रिजल्टको दिन मनभरि एक राश डर बोकेर स्कूल पुगिन्थ्यो। स्कूल परिसरमा सबैलाई पंक्तिवद्ध उभ्याएर प्रधान अध्यांपकले पहिलो, दोस्रो अनि तेस्रो गर्दै उत्तीर्ण हुनेहरू एकेकजनालाई रिजल्ट दिन्थे। आफ्नो नाउँ नआइञ्जेलसम्मं डरले ट्राफिक पुलिसजस्तो ठिङ्ग डरसरि भएर उभिरहनुपर्थ्यो। येनकेन प्रकारेण स्कूलको डर पनि काटियो। कलेज सिद्ध्याएर बिएको रिजल्ट हेर्न युनिभर्सिटीको भित्तामा रोल नम्बर खोज्नुजस्तो डरलाग्दो कुरो अरु केही पनि हुँदैन थियो। आफ्नो छोरोलाई 'पटक्कै डराउँदिनँ' भन्ने वीर पिताले विद्यार्थीकालमा

आफ्नो रोल नम्बर युनिभर्सिटीको भित्तामा अरुलाई नै हेर्न पठाएको कुरो मेरो निष्कपट छोरोलाई के थाहा ?

स्कूल, कलेज, युनिभर्सिटीलाई जदौ गरेपछि फेरि नोकरीको डर। इन्टरभ्यु जसोतसो सकियो। भयो कि भएन, प्यानेलमा नाउँ पऱ्यो को परेन ! प्यानेलको आयु कतै एक सय अस्सी दिन हुन्छ ता कतै तीन सय पैसट्ठी दिन। मलाई आफ्नो मृत्युको डरभन्दा प्यानेलको आयुको डरले हाउगुजी गरेको कुरा सम्झिँदा अहिले पनि च्यूँ....च्यूँ लाग्छ।

जन्मेदेखि मरुञ्जेलसम्मै प्रत्येकलाई डरले पछ्याइरहेको हुन्छ। संसारको कुनै ताकतले पनि रोकथाम गर्न सक्दैन, निमिठ्याम्मै पार्न सक्दैन यो डरको हाउगुजीलाई। भिखारीदेखि लिएर ठुल्ठूला नेताहरू सबैलाई डरको हाउगुजीले भेटेकै हुन्छ। तर एकजना भिखारी र एकजना नेताको डरमाझ आकाश-पातालको परक र भिन्नता पाइन्छ। डर आ-आफ्नै प्रकारको हुन्छ। पद अनुसारको डर हुन्छ। डरको हाउगुजीले सबैलाई नै भेटेको हुन्छ तर कसैले पनि प्रकाश गर्न चाहँदैनन्।

मलाई गहिरो प्रश्न गर्ने मेरो छोरो बेडरुममा कहिल्यै निदाइसकेछ, उसकी मुमा पनि। ओछ्यानमा पसें म पनि। डि लाइटको मधुरो प्रकाशमा त्यसको कलिलो छलकपटविहीन मुहार उज्यालो देखिरहेको थियो। मैले त्यसको केशराशि मुसार्दै भने– '.....हो छोरो मलाई भगवानबाहेक कसैसित डर नलागे पनि तिमीसित डराएको छु। तिमी जति-जति छिप्पिँदै जान्छौ उति-उति मेरा डरको मात्रा पनि दोबर-तेबर बढ्दै जानेछ। कारण बाबु ! तिमीलाई ड्रग्सको शिकारले ग्रस्त पार्छ कि भन्ने डरको हाउगुजीले मलाई गिजोलिरहेको छ। आफ्नो टेक्ने ठाउँ समात्ने हाँगाको निम्ति, आफ्नो हक, अस्तित्व अनि अधिकारको निम्ति जुलूस भट्याएको दोषमा बजारविचमा पुलिसको राइफलले तिम्रो छाती छिल्लिबिल्लि पारिदिन्छ कि भन्ने डरले म आत्तिइरहेको छु बाबु ! मेरै समाजका मानिसहरूसित जसले तिमीलाई अपगाल लाएर तिम्रो मानसिकतामा आघात पार्ला कि भन्ने डरको हाउगुजीले म त्रसित छु। डरले थुरथुर र आतङ्कित छु बाबु ! तर मेरो बाबु ! मैले तँलाइँ ढाँटें। पक्कै ढाँटें।'....

त्यसको कलिलो गालामा च्वाक्क म्वाइँ खाइदिने बित्तिकै मेरो हृदय भक्कानिएर आयो। सिरकभित्र टाउको लुकाएर घुक्क-घुक्क गर्दैथिएँ, श्रीमती गर्जिन्-'हन यो मान्छेले के साह्रो डिस्टर्ब गरेको ?

श्रीमतीको डरले म हल न चल भएँ। कतिबेला निदाएछु.....थाहै पाइनँ।

*सिलगढी*

# मेरो कथा यो जिन्दगीको

*थन बहादुर ओली*

घर आंगनमा खेल्दैथिएँ
बाबा आमाका खुसी दौडन्थे संग संगै
तिमी आयौ फकाउँदै
हात समाई डोऱ्यायौ बाहिर तिर
मैले पछ्याई रहें
कतै रहरले त कतै करले
तिमी मेरो जिब्रोमा विस्तारै बस्यो
के-के बोली सिकाई रह्यौ
म जानी नजानी बोल्दै गएँ
कुनबेला सुटुक्क आँखा भित्रै पस्यौं
मेरा दृष्यहरू फेरिइरहे
टाढा कतै क्षितिंजबाट
एकोहोरो सम्मोहनले तानी रह्यौ
म दौडी रहें
सागर भन्दा टाढा टाढा
मरूभूमी भन्दा पर पर ॥
ओहो कुनवेला मन भित्र पस्यौ
स्नेहले भरिएको त्यो मन
मृगतृष्णामा तड्पाई रह्यौ
कति कुरा तिमी
मेरो टाउकोलाई करप्पै अठ्याँयौ
भिन्न-भिन्न कोणबाट

भित्र भित्रै के-के ठोकि रह्यौ
थोरै पिडा धेरै आकर्षणले
लट्ठ मेरो टाउको
स्वीकृतिमा हल्लिईरह्यो
वेला-वेला ऐंठनपर्दा
बेहोशीमा म रोई रहें
कुनबेला सम्म आमा
पुछदै हुनुहुन्थ्यो आँशु मेरा
ब्यूँझाउनु हुन्थ्यो बाबा भरोसाका हातले ।।

कति निष्ठुरी तिमी
धेरै टाढा ल्यायौ मलाई
मेटिईसके मेरा पुराना स्मृतीहरू
संझनामा धुमिल छन्
मैले पार गरेका बाटाहरू
तर कुनामा कतै दमित छन्
नमेटिएका मेरा संझनाहरू
आज तिनै त विउझाउँछन् घरी-घरी
जब तिमी हिर्काउँछौ बाध्यताको वुटले
मेरो अस्तित्व बिहिन टाउकोलाई ।।

सहनु त मेरो नियति नै थियो
तिम्रै लगाम पहिरिएकै थिएँ
तर आज किन ठोक्छौ
तिम्रा निर्दयी कोरीहरू
थकित-थकित मेरो आकृतिलाई
व्यँझाउँछौ किन साँझको झिसमिसेमा
सर्वश्व पछिको एक्लो अस्थिपञ्जरलाई ।।

खोई मेरो घर त्यो आंगन
मेरो मिठो बोली निष्पाप मन
मेरा सुन्दर दृष्यहरू
मेरा साथी संगी
ममतामयी ती हातहरू
कहां ल्याएर छोड्यौ एक्लै मलाई
कहाँ लग्यौ लुटेर तिमीले
मेरा ती अनमोल गहनाहरू
आज रित्तो रित्तो एक्लो म
विवश मूर्दा तिम्रो कहर सहन ॥
एउटा लामो निद्राको
रित्तो सपना भित्र
व्युँझन नसकेको मेरो जिन्दगी
विहानीमैं निदाएको
संध्याकालमा व्युँझिएको कथा जिन्दगी ॥

***काठमाडौं***

## अनमोल वचन

"संसार माया हो । यसले मानिसलाई दुःख र कष्ट मात्र पाइन्छ । जब तिमीले नित्य र अनित्यमा भेद गर्न सिक्छौ तब यहाँ पाउँछौ, संसार माया हो ।

"तर वस्तु माया भनेर तिरस्कार गर्नुसट्टा हरेक वस्तु आफ्नो ठाउँमा उपयोगी हुन्छ भन्ठानेर सकारात्मक ढंगले सोच्नु पर्छ । वस्तुहरूको नकारात्मक पहलू छाडिदिनु पर्छ । महान् ऋषिमुनिहरूको यस्तै सोच हुन्थ्यो ।"

***—माता अमृतानन्दमयी***

# बोल्न चाँहि बोल

नारायण निरोला

बोल्न चाँहि बोल।
जे मन लाग्छ, जस्तो मन लाग्छ
जहाँ मन लाग्छ, त्यहाँ नै बोल
ए-मेरा साथीहरू हो !
'बोल्न चाँहि बोल'।
दिल खोलेर बोल, मन लाएर बोल
दिल दिएर बोल वा दिल चोरेर बोल
रहरले होस् वा करले बोल।
जे मन लाग्छ, जस्तो मन लाग्छ
जहाँ मन लाग्छ, त्यहाँ नै बोल
ए....मेरा साथीहरू हो।
'बोल्न चाँहि बोल'॥
खेल्दा बोल, खाँदा बोल
हाँस्दा बोल, हिंड़दा बोल
पढ्दा बोल, लड्दा बोल
मीठो-प्रसङ्ग निकाल्दै क्षणमा बोल।
देश काल परिस्थिति हेरेर
जे मन लाग्छ, जस्तो मन लाग्छ
जहाँ मन लाग्छ, त्यहाँ नै बोल
ए......मेरा साथीहरू हो
'बोल्न चाँहि बोल'॥
यदि युवक हौ भने युवतिका
नाभिदेखि कपालसम्मको वर्णन गर्दै बोल
तरूणी हौ भने तन्नेरिका
घाँटिदेखि घुँडासम्मको वर्णन गरेर बोल॥

मन खोलेर बोल, मन दिएर बोल
ए....मेरा साथीहरू हो।
'बोल्न चाँहि बोल'।
सकेसम्म सत्य कुरामात्र बोल
प्रत्येक प्रसङ्ग मिलाएर बोल
चौरमा गएर झारपात संग बोल
बगरमा गएर ढुङ्गा बालुवासंग बोल
कम्प्युटरमा दिमागसंग बोल
इन्टरनेटमा विश्वसंग बोल।
त्यतिमात्र कहाँ हो र!
देश काल परिस्थिति हेरेर
जे मन लाग्छ, जस्तो मन लाग्छ
जहाँ मन लाग्छ, त्यहाँ नै बोल
ए......मेरा साथीहरू हो!
'बोल्न चाँहि बोल'॥
दिनमा रातमा प्रात साँझमा
सपनिमा विपनिमा चाहे जुन सुकै बेला बोल
मौका हेरेर बोल, मौका पारेर बोल
मौका छोपेर बोल, मौका खोजेर बोल।
त्यतिमात्र होइन, तिमीलाई जे मन लाग्छ
जस्तो मन लाग्छ, जहाँ मन लाग्छ त्यहाँ नै बोल
ए.....मेरा साथीहरू हो
'बोल्न चाँहि बोल'॥
आफ्नो विषयमा होस् वा अर्काको बारेमा होस्
सम्झिन होस् वा सम्झाउन होस्
सत्यं होस् वा असत्य नै बनोस्
स्पष्ट र मिठो बोल।
आश देखाएर भए पनि भरोसा दिलाएर भएं पनि
आफ्नो लक्ष्य पूर्तिकोलागि मै भए पनि
देश काल परिस्थिति हेरेर

जे....जस्तो र जहाँ मन लाग्छ
त्यहाँ नै बोल
ए....मेरा साथीहरू हो
'बोल्न चाँहि बोल' ॥
धर्ति देखि स्वर्ग सम्म र
आकाशदेखि पाताल सम्मका कुरा गरेर होस् 'चाहे'
मजदूरदेखि भूपति सम्मका बारे मा बोल।
देश काल परिस्थिति हेरेर
जे-जस्तो-जहाँ-जतिबेला बोल्छौ
सबैको दिलमा छुने कुरा बोल
ए.....मेरा साथीहरू हो
'बोल्न चाँहि बोल' ॥
पदीय अधिकारी भए आदेशमा बोल
निम्न कर्मचारी भए निवेदनमा बोल
कवि भए कवितामा बोल
लेखक भए लेखमा पत्रकार भए समाचारमा बोल।
कल बनेर कगजमा सधैं
सहृदयको धड़कनमा बोल
त्यति मात्र कहाँ हो र!
देशकाल परिस्थिति हेरेर
जे-जस्तो-जहाँ र जता मन लाग्छ त्यतै बोल
ए.....मेरा साथीहरू हो
'बोल्न चाँहिं बोल'
तिमीलाई ठूलो मान्छे बन्नु छ भने बोल
नाम र दाम कमाउनु छ मने बोल
नेता बनेर देशको विकाश गर्ने भन भए बोल
शिक्षक बन्ने मन भए बोल
कलाकार बन्ने मन भए बोल
वकिल बन्न मन छ भने बोल। 'किनकि'

त्यहाँ बोल्ने मात्र काम पर्छ 'त्यसैले'
आजै देखि बोल्न शुरू गर
जे मन लाग्यो जहाँ मन लाग्यो
जस्तो मन लाग्यो त्यस्तै बोल
सके राम्रो बोल नसके पनि नराम्रो न बोल
तर पनि बोल
ए......मेरा साथीहरू हो
'बोल्न चाँहि बोल' ॥
अन्यायमा बोल अत्याचारमा बोल
तर्क संगत बोल कानुन युक्त कुरामा
बोलि चर्काएर, बोल, जिब्रो फड्कार बोल
आँखा कडकाएर बोल, घाँटि तन्काएर बोल
शरीर मर्काएर बोल, हात झड्कारेर बोल
जोस्-जोसले, टेबुल_थर्काएर बोल ।
ए....मेरा साथीहरू हो
'बोल्न चाँहि बोल'
'बोल्न चाँहि बोल' ॥

*सुनसरि (नेपाल)*

---

*"कता गए ती वस्तीहरू*
*कता गए ती आफन्तहरू*
*यही धूवाँको जङ्गलमा सबैलाई खोजु छ."*

ईश्वरवल्लभ

# खिरोदा खड़का र बाल साहित्य

*विकास कार्की*

भारतीय नेपाली साहित्यमा वाल साहित्यको भूमि त्यति उर्वर छैन। आजको अति विकसित कम्प्यूटर युगमा पनि हाम्रो वाल साहित्य भने वामे सरादूमा नै छ। विशेष गरेर आम साहित्यकारहरूको धारणा ठूलाहरूकै निम्ति मात्र साहित्य रच्ने भएकोले पनि हाम्रो वाल साहित्य उति नफस्टाएको हो जस्तो लाग्छ। अर्को कुरा हाम्रो समाजमा नानीहरूमा पाठ्य पुस्तक बाहेक अन्य पत्र-पत्रिका ल्याइदिने, पढ़न लगाउने र आमा-बाबु आफैले पनि आफ्नो साहित्यको पत्र-पत्रिकाहरू पढ़ने संस्कारगत गुण। प्रवृति नभएकोले गर्दा पनि हाम्रो वाल साहित्य, अन्य भारतीय भाषाको वाल साहित्य जस्तो प्रचलित नभएको हो। भारतीय अन्य भाषाहरूमा बाल साहित्यप्रति धेरै कामहरू भएको छ। वाल साहित्यलाई प्रोत्साहित गर्न, उनीहरूको संघ संस्थाहरूको द्वारा सयम समयमा कार्यशालाहरू राख्ने गर्छन्।

अघि, अघि हाम्रो समाजमा पनि आमा-बाबा, हजुरबाहजुरआमा अथवा परिवारका ठूला बड़ाहरूद्वारा प्रेरणादायक लोक कथा। परिकथा, पौराणिक एवं नीति कथाहरू, नानीहरूलाई, सुनाइन्थ्यो। तर आजको प्रतियोगितामूलक युगमा ती सब भन्ने र सुन्ने फुर्सद् कसैकोमा छैन। तर यी सबै मन-गड़न्ते व्यवधानहरूलाई पर सारी खिरोदा खड़का बाल साहित्यको निम्ति अघि बढिन्। उनले १९८८ मा 'अमर आदर्श' जीवनी, प्रथम प्रकाशित गरिन। त्यसपछि, दुई भाग क्रमश १९९० र १९९१ मा प्रकाशित गरेर बाल साहित्यको उद्यानमा थप योगदान पुऱ्याइन्। त्यसपछि 'बाल कुसुम' नामक पद्य रचना पनि प्रकाशित गरिन्। त्यस संग-संगै उनले 'बाल बघैंचा' नाम सामायिक बाल पत्रिका प्रकाशित गरेर उनले भारतीय बाल साहित्यलाई उर्वर र उज्ज्वल पारेकी थिइन्।

गिरी, वीरविक्रम गुरूङ, अच्छा राई रसिक जस्ता विभूतिहरूका संसर्ग र प्रेरणादायक सल्लाहहरूले उनका साहित्य सेवा प्रतिको मनोभाव आत्म दृढ़ भएर गयो। तर विधिको विधान, छोरीले जन्मेपछि अर्काको गोता लाग्नुपर्ने परम्पराको निर्वाह गर्दै उनी विवाहपछि, आफ्ना सैनिक पतिदेवसंगै सैनिक छावनीतिरै लागिन्। सैनिक जीवनको कठोर अनुशासनमा रहने पतिदेवको आदर्शलाई मान्दै, उनले आफ्ना मनभित्र नमेटिने गरी गाड़िएको साहित्यको नशालाई मर्न नदिई, घर फर्केपछि पुनः अंकुरित पारिन्। इच्छा भए उपाय भने झैं, श्रीमती खड़काले पुनः आफ्नो वाल साहित्यको चाहनालाई अघि बढ़ाइन्। जसले गर्दा भारतीय नेपाली बाल साहित्य उनीप्रति कृतज्ञ छ।

*सलुवा क्याण्ट*
*पश्चिम मिदनापुर*

# एकलै थिएँ/ढुक्क थिएँ

सचिन खवास 'प्रयास'

एकलै थिएँ
ढुक्क थिएँ
एकदेखि जब दुई भएँ
तबदेखि के ! भनौं
लथालिङ्गै भताङ्गभुतुङ्गै नै भए।
एकलै हुँदा
यो पनि गर्दा ठिकै थियो।
त्यो गर्दा पनि ठिकै थियो।
न सुर्ता थियो।
न चिन्ता थियो।
न रोग थियो।
न सोख नै थियो।
जब एक देखि दुई भएँ
तब देखि के भनौं !
यी सबै कुराको थुप्रो नै भएँ।
एकलै हुँदा
खाएको पनि जिउमा लाग्थ्यो
हिंड्नै नसक्ने
त्यो अप्ठ्यारोहरूमा पनि सहजै हिंड्थें।
कुन रात/कुन दिन
न वास्ता नै थियो
बोल्दा पनि नडराउनु नै पर्थ्यो।
एक देखि जब दुई भएँ
तब देखि मेरी ! बासै
यी सबै कुराहरूदेखि विपरीत नै भएँ।
एकलै थिएँ
सझोको दुनियाँमा थिएँ।

आफ्नै इच्छा र आकांक्षाको
यौवनताको आकाशमा थिएँ।
एकदेखि जब दुई भए
तबदेखि खै ! के भनौं
आफैलाई आफ्नो परिचय सोध्ने भएँ।
एकलै थिएँ।
हाँ....हाँ र हीं....हींमा थिएँ।
आकांश जस्तो छाती फुकाएर
धरती जस्तो मुटु बनाएर
हिमाल जस्तो सिर उठाएर
दुनियाँको रमिता दृश्यहेर्थें।
दुनियाँलाई दुःख पर्दा
विचारालाई चुक....चुक भनिदिन्थें।
एकदेखि जब दुई भएँ
तबदेखि के ! भनौं
आफैलाई विचरा भन्नेहरू
खोजि हिंड़न थालें।
एक्लै थिएँ
ढुक्कै थिएँ
एकदेखि जब दुई भएँ
तब पनि हिसाबमै चल्दै थिएँ।
जब फेरि दुई देखि तीन भएँ
के भन्नौ, के लेखौं
बेहिसाब र बेटुङ्गोको नै भएँ।

***सलुवा-मेढ़िनीपुर***
***पं-बंगाल***

# बिम्ब-प्रतिविम्बहरू

उदयचन्द्र प्रधान

झल्क्कन्छ आमा तिम्रो प्रतिविम्ब
हर्षित अश्रुप्रेम प्रसव वेदनाको
मेरो आँखाको चोखो रानीमा अनि
मेरो जन्मको प्रतिविम्ब चाहिँ तिम्रो आँखाको नानीमा।
झल्कन्छन् मेरो अन्य धेरै प्रतिविम्बहरू
आमा तिम्रो हर्षित नयनमा अश्रुभरि
वार्तालाप हुन्छ निःशब्दतामा दुवैको
अरू विम्बहरूको छैन स्थान यहाँ।
झल्काउन खोज्छु यस्तै प्रतिविम्बहरू
निरन्तर परमात्माको नयनमा पनि
दर्शन त्यसैको गर्न खोज्छु, साँझ-विहान भरि
विम्बहरू झल्कछन् उनको नयनमा।
थाक्छ आँखा लरबरिन्छ गोड़ा
सुक्छ घाँटी, भजन-सत्संगको दौड़मा
तर भजन सत्संगमा धरी छैन
स्थान कुनै भक्ति र अक्रप्रेमको।
झल्कन्छन् असंख्य प्रतिविम्बहरू
असंख्य नयनहरूमा सधैं
तर पाउँदिन जीवनको त्यो प्रतिविम्ब
आमा र मेरो फगत फेरि भेट भएमा पनि।
नरहोस् कुनै बिन्दु पनि अन्यान्य प्रतिछायाहरूको
केवल परमात्माको निवास होस् यो पनि

दार्जीलिङ्ग

# जुलूस

दलसिंह 'अकेला'

सखारै विहान भाले जस्तै बास्ने
ठूलो घड़ीले भाले कै आवाजमा
मलाई उठाउँछ
कारण मेरो गाँव अचेल शहर बन्यो
भालेहरू पनि आफ्नो आवाज
घड़ीहरूलाई पैंचो दिएका छन्
झण्डा बोकेर हिंड़नु छ
अचेल जस्तो गर्मी पहिले कहिल्यै थिएन
एक्काइसौं शताब्दीको सभ्य हामी
ताई छ ! टेकनोलजी छ
छैन त केवल जङ्गल
छैन त केवल कोइलीको आवाज
छैन त केवल नीलो आकाश/स्वच्छ वायु
छैन त केवल खोला नदी
शायद यसैले विश्व उष्णताको चक्रव्यूहभित्र
पर्‍यौ कि ?
भगवान बुद्धलाई अर्को बुद्ध पठाई देऊ
कसरी भन्नु ?
वर पीपलका रूखहरू पलायन भई सके
तपस्या गर्ने शान्त स्थलहरूमा
धूँवाको मुस्लोसंग कल कारखानाहरूले
सुसेली मार्दै छन्
यस्तोमा
आउने बुद्धहरूले
श्वास कसरी फेरून् ?

दार्जीलिङ्ग

# नयाँ साल

कमल रेग्मी

विक्षिप्त अनुहार लिएर
घामको पाइला टेक्दै
बलेसीमा बास बस्न आएको
वैशाख
आफ्नै आँगनमा
पखेटा फटफटाएर
सकेको छैन, बास्न ।
चाँपं गुराँसले रङ साटेछ कि क्या हो
लालुपातेको वैंश टरेछ कि क्या हो ।
आफैलाई नचिनेको लाग्छ
बिरानो लाग्छ
यो वैशाख
बूढो वैशाख ।
छोरो केश काट्न मान्दैन
गिटार किन्न कर गर्छ-बाबुचाँहिलाई
नयाँ सालमा किन्दिउँला
टारेको छ
धन्य ! थाह छैन तिनीहरूलाई
यो वैशाख हो ।
समयले
कोत्रै-कोत्रा पारेको छ
अनुहारको रङ्ग
हरियो गोबरले नलिपेको वैशाख

कुन नामले बाँचोस् !
अस्तिदेखि एउटा गिद्ध
उड़िरहेछ टाउकोमाथि
मरेको सम्झेर
लुछ्दैन मलाई ?
सत्ते होला, डर लाग्छ ।
टालेको छानामुनि
कतिञ्जेल टाउको लुकाउन खोज्छ
मान्छेले ।
आफु नाच्ने जङ्गलभरी
बाँस फुलेछ
बिसाउने ठाउँ पाउँदैन
आफुलाई वैशाखले ।
डीलमा फुलेको आरूले
नचिनेको गर्छ, वैशाखलाई ।
तर पनि
टुप्लुक्क आइपुग्छ
पूर्णेको जूनजस्तै
साइनो लाग्ने घरहरूमा
विचरा वैशाख ।
हताश हताश छ वैशाख
हेरिरहन्छ स्वार्थी भमराले
फूल चुसेको
लूब्ध भएर
यो वैशाख
पहेंलो वैशाख
पहिलो वैशाख (!)

दार्जीलिङ्ग

# शिक्षक, कवि : एक परिचय कुलबहादुर केरोंगी

*प्रद्युम्न श्रेष्ठ*

जसको हृदयमा काव्य-साहित्यको रचना क्षमता स्वतः उद्भासित हुन्छ, त्यो उद्भासित शक्तिलाई 'प्रतिभा' भनिन्छ। प्रतिभाशालीले मात्र परोक्षलाई पनि प्रत्यक्ष बनाउन सक्छ। कल्पनालाई यथार्थ पारिदिन्छ। अर्को शब्दमा भन्ने हो भने कुनै पनि काम योग्यताका साथ गर्नसक्ने बुद्धिबल नै प्रतिभा हो। यस्ता प्रतिभाका धनी शिक्षक, साहित्यकार, समाजसेवक कुलबहादुर केरोंगीको जन्म पश्चिम सिक्किमको देन्तामस्थित माङमु गाऊँमा सन् १९२४ को चैत्र ३ गतेमा भएको थियो। उनका पिताजीको स्व० देविप्रसाद गुरुङ माताजीको नाम स्व. ऋतुमाया गुरुङ र धर्मपत्नीको नाम श्रीमती धनमाया गुरुङ हों। उनका छ जना छोराहरू र दुई छोरीहरू छन्। सबै शिक्षित छन् कारण आफू शिक्षक भएकोले आंफ्ना सन्तानहरू पनि शिक्षित हुनु स्वाभाविक पनि हो। पाँचजना सरकारी नोकरीमा छन् औ एकजना व्यापार धन्दामा संलग्न छन्। छोरीहरू कुटुम्ब जिम्मा लागिसकेका छन्। पाँचै जना छोराहरूको हात-खुट्टा बाँधिसकेका छन्। उनका परिवारमा २५ जना सदस्यहरू छन्। जीविकाको मेलो खतिपाती छ जो पुर्ख्यौली प्रकारले चलिआएको छ। शिक्षाको अध्ययन बारे जान्नुपर्दा उनले १९३३ सालमा दार्जीलिङको नगरपालिका प्राथमिक पाठशालामा भर्ना भएका थिए। ट्रनबूल विद्यालय पाँचौ श्रेणी उत्तीर्ण गरेका थिए ! कुलबहादुरले सेन्ट रबर्टस उच्च विद्यालयबाट १९ वर्षको उमेरमा दशौं श्रेणी समाप्त गरी १९४३-मा फाइनल गरेका थिए। पढ़ेर आएर सर्वप्रथम देन्ताम प्राथमिक विद्यालयमा शिक्षको रूपमा नियुक्त भएका थिए।

धेरै लामो समयसम्म देन्ताम विद्यालयमा सेवारत रहेपछि कुलबहादुर केरोंगी १९७१ सालमा पश्चिम सिक्किम कै बड़ियाखोप प्राथमिक विद्यालयमा स्थानान्तर भएर जानुपऱ्यो। त्यहाँबाट चारवर्षपछि १९७५ सालमा फेरि पुरानै विद्यालय देन्ताममा सरूवा भई १ मार्च १९७६ सालमा उनी सेवानिवृत्त भएका थिए। उनले मरणोप्रान्त पेन्सनं प्राप्त गरेका थिए। उनी हिन्दू शास्त्रहरूका ज्ञाता थिए। गीता, महाभारत, रामायण, वेद, चण्डी जस्ता पुस्तकहरू खर्लप्प निलेका थिए। यसभन्दा ज्यादा त्यसभित्रका श्लोकहरू मुखस्त पारेका थिए र यसको भाव अर्थ बड़ो सरल ढङ्गमा व्याख्यान गर्न सक्षम थिए। पछि गएर आफ्नो स्वजातिको अस्तित्वलाई सुरक्षित तथा गतिशिल राख्न र सब एक हुने समय आउँदा स्वाभाविक रूपले उनले आफ्ना पूर्खाले मनाई ल्याएको हिन्दू धर्मलाई पनि माया गर्दै बौद्ध धर्म अपनाउन परेको भन्ने बुझिन्छ। उनी भन्दथे सबै धर्म बराबर छन् र सबै मानिस एक हौं भन्ने भावना उनमा प्रबल

थियो। उनी भन्ने गर्थे—'धर्म त समाज सञ्चालन गर्ने एउटा व्यावहारिक पद्धति मात्र हो। धर्मको अर्थ परमार्थ साधन कहिल्यै होइन।' वेद बारे उहाँको मन्तव्य यस्तो थियो त्यो के भने वेदमा सत्व-रज-तम, त्रैगुण भएकोले खासै रूची लिनु भएन। उनी आत्मनिष्ठ थिए र कर्मकाण्डात्मक वेद-पुराणलाई विशेष महत्त्व नदिएर ब्रह्मज्ञ बन्ने चेष्ठामा लागेका थिए। उनी भन्थे—'धर्मको बेग्लै अर्थ लगाएर पाप-पुण्यको डर देखाएर मताधिकारी धर्मगुरूहरूले आफ्ना स्वार्थपूर्ति गर्न सफल भएका छन्। ती गुरुहरूले पाप-पुण्यको आधारमा नाना प्रकारका भ्रमात्मक शास्त्रहरू रचेर भित्र्याए। आफ्नै स्वार्थको लागि कर्मकाण्डको नियम बसाए। यसरी मानव समाजलाई आफ्ना वशमा पारी आफू पूज्य हुनपुगे। समाजलाई कर्मकाण्डे कुचक्रमा घुमाई राखे। डोरीलाई सर्प हो भन्दा समाजले पत्याए। युगौंदेखि यो प्रथा चलि आएको छ।' फेरि उनी भन्थे यी सब कर्मकाण्डहरू लाटाको धनमा बाठाको चैन भने जस्तो मात्र लाग्छ। दशैं तथा अन्य चाड़बाड़हरूबारे उनको मन्तव्य स्पष्ट के थियो भने दशैं, तिहार इत्यादि हाम्रो ठूलो चाड़े हो तर यस्ता उत्सव मनाउँदा मानिसहरूले बेहिसाब खर्च गर्नु हुँदैन र आर्थिक दृष्टिबाट यसो गर्नु उचित छैन भन्ने उनको धारणा थियो। 'जाने दशैं नजाने बसैं' उक्त कुरालाई हृदयङ्गम गरी सभ्य तरिकाले चाड़बाड़ मनाउनु समाजमा हेल-मेल, भेटघाट कायम राख्ने र सद्भावना जागृत गर्ने एउटा साधन हुनाले चाड़बाड़ मनाउँदै गर्नु ठीक छ भन्थे।

यो संसारमा जन्म ग्रहण गरेपछि मनुष्यको उद्देश्य बारे उनको धारणा के थियो भने सत्संगत र सद्कर्म गर्दै जानुपर्छ र मानिसको जीवन चैतन्य चोला हो र यो जन्म पाउनु दुर्लभ छ, साथै सांसारिक बनेर जीवन नष्ट गर्नु पाप हो, हामीले हाम्रो जीवनको मूल्य बुझ्नु पर्छ। परोपकार जस्तो धर्म कर्म अरू केही छैन। यसको माध्यमबाट निर्वाण हासिल गर्ने प्रयत्न जारी राख्नु पर्छ। यसो गर्नाले हामी मावन बनौं पशु अथवा दानव नबनौं। यस्ता विचारका थिए हाम्रा काईला गुरुबाबु।

उनकै प्रयासमा १९६६ तिर पनि 'नौ नामी नेत र पन्द्रह प्रसिद्ध पुरुष' जस्ता पुस्तकहरू शिक्षा विभागद्वारा पाठ्यक्रममा स्वीकृत गरिएको थियो र त्यस्ता आदर्श पुस्तकहरू हामी विद्यार्थी छँदा पढ्ने मौका पायौं र उनले बड़ी रूची साथ पढ़ाउनुहुन्थ्यो। यिनै महान् शक्तिहरूको जीवनीहरूबाट प्रेरणा प्राप्त गरेर धेरै विद्यार्थीहरूले आफ्नो अध्ययनमा समुचित उन्नती गर्न सकेको भन्ने उनी अनुभव गर्दथे। उनले पढ़ाएका विद्यार्थीहरू कुनै कम भएनन्। कोही शिक्षक भएका छन्, कोही वन अधिकारी, अभियन्ता, डाक्टर, पुलिस अधिकारी, नेता, मन्त्री, अध्यक्ष आदि जस्ता पदमा आसिन छन्। नामै लिनुपर्दा श्री पि०टि० लक्सम जो डेपुटी चिफ मिनिस्टर हुनुहुन्थ्यो, श्री सि०बी० सुब्बा, भू०पू० विधान सभा अध्यक्ष, श्री ओ०एच० सुब्बा, आई०जी०

पी०, श्री विक्रम गुरुङ, अतिरिक्त सचिव, श्री प्रद्युम्न श्रेष्ठ अतिरिक्त मुख्य अभियन्ता), श्री एम० बी० गुरुङ (अतिरिक्त मुख्य अभियन्ता), डा० शेखर प्रधान सिनियन सर्जन, नाम्ची र अन्य धेरै अफिसरहरू, कर्मचारीहरू, शिक्षकहरू उनीले पढ़ाएका विद्यार्थीहरू हुन् जुन सरकारका उच्च पद्मा थिए र छन्। यसको लागि हामी गुरुजीप्रति कृतज्ञता ज्ञापन अवश्य गर्नुपर्छ।

धार्मिक विचारधाराहरूमा उनको अर्को मन्तव्य थियो। कर्म काण्डे धर्ममा उनी विश्वास गर्नु हुन्न थियो। उनी भन्नेगर्थे कि प्राणीहरूमा सर्वश्रेष्ठ मानिस हो। भगवान्लाई चिन्ने शक्ति मानिसमा छ। भगवान् सृष्टिका मालिक हुन्। उनी सर्वव्यापी तथा सच्चा न्यायाधीश हुन्। यसोसले हामीमा विद्यमान सारा सुखदुख उनकै देन मान्नुपर्छ। रोग, शोक, भय, मृत्यु कसैलाई मन पर्ने कुरा होइनन् ता पनि कर्मफल भोग्नै पर्छ। यो बुझेर धर्म कर्म गर्नुपर्छ। धर्म कर्म भनेको सहनशीलता, सरलता, दया, पवित्रता, क्षमा, दान, त्याग, प्रेम इत्यादि हुन् जसका माध्यमबाट सत्कर्म गरिन्छ। भगवान्को नाम रटेर मात्र के हुन्द र! कर्ममा ल्याउनुपर्छ। सांसारिक सुख चैन क्षणिक हुनाले त्यसमा नभूलि मुक्तिदाता भगवान्लाई सदा स्मरण गर्नुपर्छ। मानिसले सद्‌गतिको कामना गर्नुपर्छ र हामी मानव हौं भन्ने बुझ्नु पर्छ। यस्ता विचारका थिए हाम्रा सर कुलबहादुर केरोंगी।

उपदेशहरूमा आफ्नो जीवनमा मानिसले के कार्य गर्दा ठीक हुन्छ भन्ने विचार जान्न चाहाँदा उनी यसो भन्ने गर्दथे। मानिसले आफूले चिन्नुपर्छ औ आफूले आफैमाथि शासन गर्नुपर्छ। जीवनको वास्तविक लक्ष्य निर्वाण प्राप्त गर्नु हो। घरि घरि मानव जीवनको मौका आउँदैन। यसर्थ हामीले पवित्र जीवन यापन गर्नुपर्छ। पुनर्जन्ममा आस्था राखी सत्कर्म गर्नु अनिवार्य छ। ज्ञानको खोजीमा लागिरहनु पर्छ र सबै कुराको अन्त ज्ञानमै छ। ज्ञानी मानिस भगवान्का प्रिय पात्र हुन्छन्। विद्यार्थीहरूलाई सल्लाहको रूपमा काईंला सर यसो भन्ने गर्दथे–'जी हजुर कहिले नहुनु र संयमी बन्नु पर्छ। संसारमा हामीले सबभन्दा धेर आदर, मान, इज्जत आफ्ना माता-पिता र गुरुलाई दिनुपर्छ।' उनीहरू हाम्रा जीवन ज्योती हुन्। उनीहरूको त्याग, तपस्या र देन अवर्णनीय छ भन्ने कुरा हामीले बुझ्नु पर्छ। यस्ता यस्ता उनका विचारहरू थिए।

पुज्य गुरुजी कुलबहादुर केरोङ्गीको हातबाट दशैंको टिका लगाउनु म वर्षैपिच्छे उनको घरमा जान्थें र राम्रा राम्रा विचार, उपदेशहरू बोकेर घर फर्कन्थें। गत २००६-को दशैंको टिका उनको हातबाट लगाएको सायद अन्तिम टिका थियो जो आज आलो अनुभव गर्दछु। हिमाली प्रकाशन, देन्ताम, प्रकाशको रूपमा उनका दुई कृतिहरू 'झिल्का' र 'फिलिङ्गो' प्रकाशन गर्नु पाउँदा म अति गर्वको अनुभव गर्दछु। हिमाली

प्रकाशन, देन्तामको आयोजनामा देन्ताम माध्यमिक विद्यालयको सभाकक्षमा एउटा कविता गोष्ठी साथै वयोवृद्ध रचनाकार कुलबहादुर केरोंगीको कविता संग्रह 'फिलिङ्गो'-को कार्यक्रम भव्य रूपमा २४ अक्टोबर, २००४-को दिन सम्पन्न भएको थियो। उक्त अवसरमा मुख्य अतिथि कुलबहादुर केरोंगी थिए। स्थानीय युवा कवि कवियत्रीहरूले आ-आफ्ना कविताहरू पाठ गरेर सबैलाई मन्त्रमुग्ध पारेका थिए। श्री विजयकुमार सुब्बाले 'फ़िलिङ्गो' कृतिको निरूपण बड़ो विस्तृत रूपमा र गहिरो प्रकारले गरेका थिए। यस अवसरमा केरोङ्गी परिवारका सबै सदस्यहरूको उपस्थिति थियो।

यस्ता महान् प्रतिभा कुलबहादुर केरोंगीलाई विमारी अवस्थामा गत फरवरी महिनाको अन्तिम फरवरीमा तादोङ्को मनिपाल अस्पतालमा भेटने र दर्शन गर्ने मौका पाएको थिएँ। उनी त्यस समय सिकिस्त विमारी थिए। बोल्ने अवस्थामा पनि थिएन। जीवनको संघर्षमा अन्तीम दिनहरू विभिन्न रोगले च्यापी रहेको थियो। अन्तमा गत २६ फरवरी २००७ सालमा गान्तोकमा उनको स्वर्गारोहण भयो र मार्च १ तारिख २००७ को दिन देन्ताम, माङ्गमु आफ्नो घरमार्थि पट्टि उनको दाहसंस्कार बौद्ध परम्परा अनुसार सुसम्पन्न भएको थियो।

कवि, लेखक, कुलबहादुर केरोंगीका लेखहरू, कविताहरू धेरै पाण्डुलिपीको रूपमा छरिएर बसेका छन्। त्यस मध्ये 'झिल्का' (केही विचार र उपदेशहरूको सङ्कलन) १९९२-मा नै हिंमाली प्रकाशन, देन्तामद्वारा प्रकाशित भएको थियो। यस पुस्तकमा केही कविताहरू, लेखहरू छन्, जुन सबै उपदेशात्मक रूपमा छन्। नयाँ पिँढ़ीलाई केही सन्देशजनक छन्। पाठकहरूले पढ़े भने मन पराउने खाल्का छन्। त्यस्तै उनका दोस्रो कृति 'फिलिङ्गो' (कविता सङ्ग्रह) पनि हिमाली प्रकाशन देन्तामद्वारा २००४ मा प्रकाशित भएको थियो। यो पुस्तक सानो भए पनि यस भित्रका रचनाहरू स्तरीय र उपयोगी छन्। यस कृतिको मूल उद्देश्य चाहिँ 'श्रम महामन्त्र, कर्म सुधार नै धर्म' हो। लेखक सँधै निर्माणको चिन्तनमा लागेका हुन्छन्। आफ्ना अनुभूतिहरू कलमद्वारा उतारेर समाजलाई नै छ्याङ्गै देखाउन पाए ढुक्क मान्छन्। आफू र आफ्नो समाजले भोगेका दुःखहरू र तिनका समाधानहरू लेखेर प्रस्तुत गर्न पाए आनन्द मान्छन् साथै यस भित्र जीवनका सबै पाटाका तिता-मिठा पटाहरू भोगाइहरू समेटिएका पाइन्छन्। आफ्नै आँखा वरिपरिका अवस्थाहरू व्यक्त गरिएका पाइन्छन्। समयलाई अलिकति पनि नष्ट हुन दिनु हुँदैन भन्ने र चेतनशील जीवन फेरि पाउन दुर्लभ छ भन्ने सल्लाह दिने गर्दछन् कवि। यसमा रचनाहरू सरल भाषामा धारा प्रवाह सलल बगेका कविका गद्य कविता शिरदेखि पुछारसम्मै अर्ती र उपदेशले भरिएका छन्।

***सिक्किम***

# पाठक-पत्र

सम्पादक 'उदय'

वाराणसी, उ.प्र.

'उदय'-को पूर्णाङ्क १३८ हात पऱ्यो, आफ्नो कलेवरमा वृद्धि गरेर यसले पाठकलाई मनग्गे सामल दिएको छ। साहित्यका विविध विधा जस्तै कविता, यात्रा, कथा, व्यङ्ग्य, लेखादिले सुसज्जित सर्वभारतीय स्तरको यो लघु पत्रिकाको वर्तमान विशेषता हो यसको नैरन्तरता। रचनाहरूको स्तरीयताको जिम्मा अवश्य लेखकमा बढी पर्न गएको हुन्छ, सो भविष्यमा लेखकले आफ्नो जिम्मेदारी सही-सही सम्झेर वहन गर्नै नै छन्।

'उदय'-को उत्तरोत्तर उन्नति कामना गर्दछु।

*शुभाकाङ्क्षी*
*खड्गराज गिरी*
*डिगबोई (असम)*

# नेताजी बोल्नै पर्छ

कमल पोखरेल

बोल नेताजी सुभाष अब ता, तिमीले बोल्नै पर्छ
तटस्थ रहेर, चुपचाप यसरी, बसेर कसरी हुन्छ ?
तिमीलाई हिटलरकहाँ पुऱ्याउने, खड्ग बहादुर विष्ट खोई ?
तिमीलाई नजबन्दबाट छुटाउने, घनश्याम गुरुंग आज खोई ?
आजाद हिन्दका सेकेण्ड लेफ्टिनेन्ट, ज्ञानसिंह विष्टको इतिहास खोई ?
तिमीलाई बचाउनलाई बलिदान दिने, धनमान, धोजबीर थापा खोई ?
गोर्खा सिपाहीको उर्दी लगाइवरि, एल्गिन रोडबाट कसले भगायो ?
हाउड़ाबाट पेशावर पुग्नलाई, भनन रेलमा कसले चढायो ?
बोल नेताजी सुभाषचन्द्र बोस, अब त बोल्नै पर्छ
माला लगाउँदै समाधी सजेर, बसेर कसरी हुन्छ ?
स्वाधीनताको यात्रा शुरू भो, अफगानिस्तान तिमी पुग्नै पर्छ
तिमीले दिएका धन्यवाद मलाई, तब मात्र स्वीकार्य हुन्छ
यसरी भन्दै विदेश पठाउने, त्यो गोर्खाको इतिहास खोई ?
तिमीलाई साथ दिने स्वतन्त्र संग्रामी, वीर गोर्खाको नामसम्म खोई ?
काबुल सीमाना पार गराउँदा, तिम्रो सुरक्षामा जाने वीर खोई ?
तिमीलाई सुरक्षित गन्तव्य पुराउने, ती दुई वीर सपुतले गोली खाई ?
आजाद हिन्द फौजमा लड्ने, पन्ध्र हजार गोर्खा खोई ?
स्वाधीन बनाए केही पाएनन्, तर सुनासम्म पनि आज खोई ?
हुँदैन चुपचाप बसेर यसरी, हाम्रो कुरा अरू जान्ने खोई ?
सत्य तथ्य छर्लङ्ग राखी, हाम्रो पक्षमा बोलेको खोई ?
कति अझ शोषणमा शोषिन्छन् गोर्खा, तिमीले बोल्नै पर्छ
समाधी सजेर चुपचाप यसरी, बसेर कसरी हुन्छ ?

बाल विग्रेडका इन्द्राणी सावित्री, कसरी मरे भन, तिनीहरू, खोई ?
आफू पडेकर ट्याङ्क दुश्मनको, लथालिङ्ग पार्ने ती विराङ्गना खोई ?
बाल विग्रेडमा तिमी आफै मन, कति गोर्खा वीर थिए ती खोई ?
सबैले समान अधिकार पाउँदा, भन गोर्खालाई आज खोई ?
आज पर्यन्त सीमाना बचाउने, गोर्खाको भागमा के छ खोई ?
भन नेताजी सुभाष अब ता, तिमीले बोल्नै पर्छ
काम सर्‍यो भाँडो, आफल तेरो ठाँड़ो, गरेर कसरी हुन्छ ?
कि त मन भारतमा, आजाद हिन्द फौज छँदै थिएन
भारतवर्षमा कहिले कसैसित, स्वाधीनता आन्दोलन हुँदै भएन
फिरङ्गी फर्काउन, स्वतन्त्र दिलाउन, भन गोर्खाको त्याग थियो कि थिएन ?
बोल नेताजी सुभाष अब ता, तिमीले बोल्नै पर्छ
चुपचाप यसरी मुख नखोली, बसेर कसरी हुन्छ ?
तिमीले दिएका भायोलिन बजाउने, रामसिंह ठकुरीको इतिहास खोई ?
जन गण मनको संगीत उमार्ने, भन नेता ती को थिए खोई ?
आजसम्म त्यागी भारत बचाउने
शहीदका सन्तानलाई के गर्‍यौ खोई ?
स्वाधीनता सेनानी वीर नेता भन
गोर्खाहरूलाई के दियौ खोई ?

***रेलिंग, विजनवारी***

**ज्यूँदै मर्‍याको भनि नाउँ कस्को ?**
**उद्यम बिना बित्तछं काल जस्को ? – भानुभक्त आचार्य (प्रश्नोत्तरी)**

# दाता

*सागर 'मणि' थापा*

त्यो शुक्रबारको साँझ पनि उनीहरू गजल-रेष्टुरेन्टको जमघटमा सामेल भएका थिए। उनीहरू साधारण कर्मचारी थिए। तर, आफ्नो स्तरका साथीहरू भेला हुन्थे। गफसफ चल्थ्यो। हल्का तवरले खान्थे, पिउँथे। उनीहरूलाई हेर्ने दुईथरीका आँखाहरू हुन्थे। एकथरीले भ्रष्ट र घुस्याहा ठान्दथे। कारण, औसत आय भएका मानिसहरू रेष्टुरेन्टमा जान सक्तैनन्। पिउन सक्दैनन्। तर, दोस्रो खाले मानिसहरूको नजरमा उनीहरू जँड्याहा कहलिन्थे। किनभने विदेशी मदिरा पिउने सामर्थ्य थिएन। अतः 'खोयाविर्के'को उपनाम दिइएको थियो।

एउटा के कुरामा भ्रम नहोस् भने, ती मित्रहरूमा मद्यपान र धुम्रपान नगर्ने पनि छन्। चोरहरूको हूलमुलमा मिसिएपछि सज्जन व्यक्ति पनि 'चोरै' ठहरिन्छ। जस्तो, भ्रष्ट नेताहरूको दलमा बुद्धिजिवी वर्ग पनि 'भ्रष्ट' नै कहलिएको पाइन्छ। पियक्कड मित्रहरूको माझमा एउटाले राधाको कुरो निकाल्यो। त्यसो त अन्य जमघटहरूमा पनि उनको विषयमा कुरो नउठ्ने होइन। उनीहरूबीच ठट्टा चल्दथ्यो। स्वस्थ्य मनोविनोद गर्ने गरिन्थ्यो। समय कस्तोसम्म आइसकेको थियो भने, राधाको कुरा नगरे खाना पच्दैन जस्तो गर्दथे। वातावरण नीरसझैं लाग्दथ्यो।

केही महीना यतादेखि उनीहरूको राधाको बारेमा गाइँगुइँ रूपमा अप्रिय हल्ला चल्न थालेको थियो। साथी मध्येकै एउटाले प्रसङ्ग झिक्यो—'तिमीहरूले एउटा कुरा थाहा पायौ ? हिजो लेखाशाखाका कर्मचारीहरूको बीचमा राधाको धज्जी उडाएका थिए रे। बिचरी राधा....।' 'अँ, अँ। भन् त ती भातेहरूले अरू के के भनेर हाम्री राधाको इज्जतमाथि प्रश्न चिन्ह खडा गर्दै थिए रे... ?' अर्कोले गिलास रित्याएर जुगुप्सा देखायो। हरिशरणलाई रक्सीले 'ठिक्ठिक' पारिसकेको रहेछ। नत्र हठात् साथीको कठालो नसमात्दो हो। र, जथाभावी अपशब्द नफलाक्दो हो—'साले गधा। के नचाहिंदो कुरा सुनिस् तैंले ?' सुनेको कुरा थियो, तर आधिकारिकता थिएन। बच्नै पऱ्यो, उसले बताइदियो। राधाको पेटको बच्चा अजयको होइन भन्ने हल्ला चलाउन थालिएको थियो। हरिशरणले कठालो छोडेको छैन, ऊ भन्दैछ 'मेरी राधाको बारेमा त्यस्तो नराम्रो कुरा.... ?' 'मेरी होइन मोरा। अर्थको अनर्थ लाग्ला। हाम्री भन् न, हाम्री...।' सबभन्दा पाको रक्स्याहा मित्रले बोली सच्याउन प्रयोगार्थ भन्यो। ऊ भाग्यमानी रहेछ, हरिशरणको अँठ्याइबाट मुक्ति पायो। उसले पाको मित्रको भावनालाई

कदर गऱ्यो। लेखाशाखाका साथीहरूको नामावली नदिई सुखै पाएन। परेन फसाद ? अफिसमा 'गाईजात्रै' हुने सम्भावना थियो।

हरिशरणलाई रक्सी लागेपछि झगडा नगरी नहुने थियो। ऊ त गजल-गायकसंग '५ इट' गर्न तयार भयो। उनीहरू मुरलीधरका 'फ्यान' थिए। तर, रेष्टुरेण्ट त साँझको चौतारी हो। साले हरिशरणले आफ्नो 'बपौती' ठान्यो। उसको 'फर्माइस'को गजल नगाएको भनेर उपद्रव मच्चायो। त्यो समूह यथाशीघ्र त्यहाँबाट बाहिरिन विवश भयो। राधा दोजिया थिइन्। त्यस दिन स्वास्थ्य परीक्षण गराउन लैजाने पालो विनयको थियो। पहिले पहिले सातै जना मित्रहरू जान्थे। जँचाउथे। र, घरमा पनि संगसंगै ल्याउँदथे। समयक्रममा डा.ले झिँजो मान्न थाल्यो। समाजको नजरमा पनि अस्वाभाविक कार्य ठानिन्थ्यो। अतः त्यो दिन विनयले सम्झौताको नियमलाई तोडिदियो। हरिशरणले राधालाई अस्पताल लगेर ल्याइसकेको थियो। ऊ खूबसंग पड्कियो 'मलाई थाहा थियो तिमीहरूबीच यस्तै हानथाप चल्ने छ। त्यसैले तिमीहरूको कर्तव्य पनि म एक्लैले पालन गर्दै आएको छु..।' 'त्यसो त राधाले जन्माउन गइरहेकी बच्चाप्रति सबभन्दा बढी हक पनि त तेरै लाग्ला नि...।' मुखाँ हान्नु जस्तो...। विनयले प्याच्च जवाफ दियो। जाँड खाएको भए त हरिशरणको हातमा दही किन जम्थ्यो नै। नखाएको भएर बच्यो। यस्तो बेलामा हरिशरण 'देउतै' लाग्दछ।

बिहान नरेश डेराको बरन्डामा बसेर चराचुरूङ्गीका कलरव सुन्दै चिया पिइरहेको थियो। पल्ला घरको झ्यालबाट छिमेकी मानिसले एकदम रिस उठ्दो सवाल गऱ्यो— 'राधाको पेटको बच्चा त तिमीहरू सात मित्रहरूको 'वीर्यदान' बाट 'निर्माण' भएको हो रे नि। के यो कुरा.... ?' 'हो। तिमीलाई भन्नु केही छ..... ?' उल्टै ऊ झोंक्कियो। साँचो कुरा बेग्लै ठाउँमा थियो, तर नरेशले महाभारतको कर्णको उदाहरण दियो किनभने उनलाई कुन्तीले सूर्यको मद्दतबाट जन्माएकी थिइन्। उसको जवाफ सुनेर ऊ झ्यालबाट भाग्यो। अत्याचारै भएपछि एकसाँझ राधाले मित्रहरूलाई उपस्थित गराइन्। हठात् उनी त रून पो थालिन्। लठेब्रो साथीले उनलाई गिज्यायो। 'लौ, यो राधा भाउजू त डराएर रून पो थालिन्। बच्चा पाउन पनि रहर। फेरि दुख्ला भन्ने पनि डर ? हा...हा...।' लठेब्रोले सँधै हसाउँथ्यो। अहिले पनि झुक्किएर सबैजना हाँस्न थाले। राधा त झन्झन् डाँको छोडेर पो रून थालिन्।

त्यही समाज हो, जसले राधालाई 'बाँझी आइमाई' को तुच्छ संज्ञा दिन्थ्यो। विवाह भएको वर्षौंवर्षसम्म पनि निःसन्तान हुन पर्नेको पीडा राधाले पनि भोग्न विवश भइन्। त्यसो त अजय पनि कम्तीको पीडित व्यक्ति होइन। खासगरी कुनै जमघटमा जिस्किएको बहानामा उसप्रति साथीहरूबाट छेडखानी हुन्थ्यो। उसलाई धेरैचोटि

हगूँहगूँ-मुतूँ पारिन्थ्यो । कुराकै सिलसिलामा एकसाँझ जँड्याहा साथीले मिति पुग्ने गरेर भन्यो-'पैंसा-जस्तो स्वास्नी पनि सर-सापट दिन मिल्ने भए कत्ति मज्जा हुन्थ्यो । कि कसो अजय सर ?' बिचरी राधा । त्यहाँबाट भाग्नु सिवाय विकल्प थिएन । अजयले रिसको झोंकमा कतिसम्म तल झर्न बाध्य हुनुपऱ्यो भने, भन्यो 'दे न त तेरी स्वास्नी मलाई एक रातलाई.... ।' कम्ती बबाल भएको थिएन त्यतिखेर । तर, अबको समय भिन्दै भैसकेको थियो । राधालाई हरतरहले सम्झाउने काम हुँदै आयो ।

अजय र राधा उनीहरूका सहकर्मी थिए । अचेल अजय धेरै टाढा छ । ऊ छँदाकै एउटा घटना हो । हरिशरणले त्यो दम्पत्तीको उद्धार गर्ने प्रस्ताव ल्यायो । पैसा खर्च गरेर सन्तान जन्माउन सकिंदो रहेछ । एकजना स्त्रीरोग विशेषज्ञकहाँ सल्लाह लिने कुरा गरियो । कताकति सुन्नमा आएको, तर नेपालमा भर्खर भर्खर सुरू गरिएको नयाँ वैज्ञानिक प्रविधिबाट पनि बच्चा जन्माउन सकिंदो रहेछ । त्यसलाई 'टेष्टट्युब बेबी' भनिंदो रहेछ । त्यसबारे अल्प जानकारी दिंदै डा.ले बताए 'विभिन्न कारणले प्राकृतिक रूपबाट गर्भधारण हुन नसक्ने महिलाको डिम्ब र उसको पतिको शुक्रकीट निकालेर त्यसलाई विशेष प्रकारको भाँडोमा राखेर शुक्रकीटलाई डिंम्बमा प्रत्यारोपण गरिन्छ । र, यसरी प्रत्यारोपण गरेपछि त्यसलाई ४८ देखि ७२ घण्टासम्म बाहिरै राखेर पुनः महिलाको पाठेघरमा राखिन्छ.... ।' तर, 'टेष्टट्युब बेबी' सर्वसाधारणको लागि त 'आकाशको फल' साबित भयो । कहाँबाट ल्याउने २/३ लाख रूपियाँ ? हरिशरणले मुखको तीतो पोख्या 'डा.साप । तपाईंलाई 'खाले' भनियो भने सही हुन्छ कि गलत ?' उसको विजयकुमार शैलीको प्रश्न सुनेर डा. हाँसिरहे । वास्तवमा त्यो एकप्रकारको 'जुवा' नै थियो । त्यत्रो रकम खर्च गर्नु तर बच्चा जन्मने 'ग्यारेन्टी' नहुनु ? डा. को रकमी कुरा सुनेर नरेशको पनि धैर्यता गुम थियो र प्याच्चै भनिदियो 'डा.साप । तपाईंजस्ता पुरुषहरूलाई त आइमाईहरूको गुप्ताङ्ग हेरेर पैसा असुल्ने डा. भन्दारहेछन् नि ।' उसको भनाइप्रति डा.ले आक्रोश पोखे 'त्यति मात्र किन ? मलाई त प्रकृति विरोधी पनि भन्दछन् । किन थाहा छ ? मैले कृत्रिम तरिकाबाट निःसन्तानलाई सन्तान दिंदै आएको छु । र, त्यो पनि एकैचोटि चम्ल्याहा समेत । महाभारतको कथा त सुनेको होला नि ।' उनले धृतराष्ट्र र पाण्डुको दृष्टान्त सुनाए । दानवीर कर्णको स्मरण गराए ।

डा.को कुरा सुनेर हरिशरण एकाएक पुलकित हुन पुगेको थियो । उसलाई पनि एउटा छोराको आवश्यकता थियो । त्यसो त एउटी छोरी नभएकी होइन । तर पत्नी रोगी थिई । एकातिर राधाको पीडा । अर्कोतिर आफूलाई पनि एउटा पुत्रको लालसा । उसले आधा रकम हाल्ने मन्जुर गऱ्यो । जाँड नखाँदा उसलाई उसै 'देउता' भनिएको होइन् । बाँकी रूपियाँ अरूहरूले ऋण दिए । कस्तो अचम्म ! कसैले पैसाको अभावमा निःसन्तान भई बाँच्नुपर्छ । तर, कसैलाई पैसा भएर पनि सन्तान प्राप्त नहुने रहेछ ।

राधाले आफ्नो गर्भबाट 'टेष्टट्युब बेबी'को रूपमा एउटी छोरी जन्माइन्। हरिशरणको सपना अपूरो रह्यो। अजय कर्जा चुक्ता गर्न मुग्लान भासिइसकेको थियो। मित्रहरू भावनात्मक रूपमा मात्र नजीक थिए। राजा भाउजू समानकी नारी हुन्, तर बेइमानी समाजले कुदृष्टिले हेऱ्यो। वास्तवमा 'टेष्टट्युब बेबी'को जन्मदाता त डा. थिए। उनैले न्वारन गरिदिएको भए राम्रो हुन्थ्यो। तर उनीहरूमाथि परिबन्द परी परी आयो। पण्डितले बच्चीको नाम राखिदिए ओमिला। तर, मानिसहरूले भन्न थाले 'सात बाउकी छोरी'। कारण, अजयको अनुपस्थितिमा सातजना साथीहरूले ओमिलाको न्वारन गरिदिए।

तपाईंहरू पनि उनीहरूकै जस्तो सत्कार्य गर्न एकजुट हुने हो कि ? छ कोही त्यस्तो उदारवादी दाता ?

काठमाडौं

# आमाको मुहार

रामेश्वर राउत मातृदास

माकुरे जालो कपट कालो यो मनमा पाल्दिन
निश्चल शुद्ध हृदय बुद्ध म कहिल्यै फाल्दिन
हिमचुली हाँसी जून/तारा गाँसी संसार फैलन
पवित्र आत्मा निर्मल राख्छु म दिन्न मैलन
सृष्टिको हाँगो अमृतको छाँगो उम्रने हृदय
सत्यका पाइला टेकेर बस्छु म सधैं निर्भय
के लानु छ र संसारबाट फूलको जुहार
अटल राख्छु खुशीको बहार आमाको मुहार
झुल्कने घाम यही जीवन धाम मुक्तिको दुवार
म आफैं आफ्नो शिखरको यात्रा माग्दिन गुहार
छाडेर जान्छ ज्योतिले पङ्ख गगनै छहारी
उठेर शिर संसार चुम्छ एकपल नहारी
भकानोभित्र चकानो पर्छ चरीको बहले
आशाको दियो झुल्केर बल्छ जीवनको चहकले
यी ध्रुव तारा चम्कँदै डुल्छन् अँध्यारो फोरेर
ज्ञानको मार्ग खुलाउनैपर्छ हुँदैन मोरेर
दशधारा दूध आमाको छाती यी सातै सागर
सुकेर जान म दिंदैदिन्न उत्साह-जाँगर
नेपालको माटो नेपाली बाटो मुटुको धड्कन।
अनन्तसम्म ईशले दिन्न अत्यास भड्कन।

*वशिष्ठ धाम, निर्झर सिन्धुबस्ती, ज्ञानेश्वर*

# हार गुन्जियो

*लोकनाथ पोखरेल*

माटोको मर्मले पोल्यो, मारमा सार गुन्जियो
राष्ट्रियता सल्बलाएछ रक्तको धार गुन्जियो
ठट्यौली हैन ए साथी। नयाँ नेपालका कुरा
एकता-योजना खै त धूलाको खार गुन्जियो
माटो को....
आनीबानी लुलो लाग्छ अर्थतन्त्र सबै लुलो
जातीय-सङ्घीय नारा योजनाकार गुन्जियो
राष्ट्रियता....
च्यातियो दृष्टिको टालो जमानी को हुने अब ?
आफैलाई भुल्यौ साथी ! निष्ठाका भार गुन्जियो
माटोको....
भोकायौ सप्रियौ मित्र ! सामन्ती सहभोजमा
अँधेरी रातमा तिम्रो छिनेको तार गुन्जियो
राष्ट्रियता....
लिलामी के भजन् गर्नु बेलाको बोली भो सँधै
वैतरणी चल्यो भेल आस्थामा मार गुन्जियो
माटोका....
अझै सोच निखरेर कालो कल्मष त्यो सबै
समाल दृष्टिको टालो च्यातेर हार गुन्जियो।
माटोको/राष्ट्रियता.....

*नवलपरासी, नेपाल*

संस्मरण-निबन्ध

# निर्वस्त्र सौन्दर्य

*ज्ञानेन्द्र विवश*

हामी सबै यात्री त्यतिबेला चुपचाप थियौं । आँखा वरपरका पृथक अवस्थितिहरूले हाम्रो बोली बन्द गरिदिएको अवस्था थियो । प्रकृतिले लट्ठ पारेर लठ्याएको क्षण थियो त्यो । तर आँखा चञ्चल र मन जिज्ञासु बनेका थिए । यद्यपि मौनतामा पनि हामी धेरै कुरा गरिरहेका थियौं । शून्यतामा पनि हामी थुप्रै चहलपहलको माझमा पुग्थ्यौं मरितरी मनाङ जाँदै गर्दा थाकेर हैरान भएपनि प्रकृतिको विराटतामा हामी विस्तारै हिँडिरहेका थियौं । सुनसान र एकदमै एकलासको त्यो अनकन्टारमा जीवन र प्रकृति एकाकार भइरहेका थिए ।

हिँड्नपर्ने बाटो अपठ्यारो थियो । बाँदर लड्ने भीरमा बाटोका मात्रै रेखा देखिन्थे । ती रेखा पर अझ परसम्म आँखाले देख्न सकिने विन्दुभन्दा टाढा पुगेर विलीन हुन्थे । फेरि तिनलाई नियाल्न सकिँदैनथ्यो । हामी पुग्नपुपर्ने गन्तव्य पनि तिनै विलीन रेखासँगै कतै ओझेलमा धमिलिरहेका थिए । कतिपय ठाउँमा तिनै रेखाहरू पछ्याउँदै बडो मुस्किलले हिँड्नपर्थ्यो । स्थानीय जीवनशैली कतिको कष्टकर होला ? सहजै अनुमान गर्न सकिन्थ्यो । अभावै अभावका कारण ग्रामीण जीवनको स्पन्दन पहिले जस्तो अनुभव गर्न सकिँदैनथ्यो । बसाइसराई वा सहरबजार अथवा विदेश पलायनको प्रवृत्तिले युवापुस्ताको त गाउँघरमा अनिकालै थियो ।

यति भइकन यस्तो अभाव र अनिकालको भेगमा पनि हाम्रो यात्रा गतिमानै रह्यो । हाम्रो हिँडाईमा बेग्लै गति र उत्साह थियो । किनभने त्यस दुर्गम पाटोमा विराट सुन्दरता विद्यमान थियो । त्यही सौन्दर्यको आकर्षणमा हामी डोरिँदै गइरहेका थियौं । प्रकृतिको अदृश्य स्वागतमा रमाउँदै, पसिनाले लपक्कै भिजेर पनि हिँडाईमा कुनै शिथिलता थिएन । जति उकालो चढ्यो उति देउराली, भञ्ज्याङ र पाटीमा विसाउँदै र पसिना पुछ्दै आफू आएको बाटो पछाडि फर्किएर हेर्दा थाकेको सबै दुखाई दूर हुन्थ्यो ।

आँखै सामु ठोक्किन आउने प्रकृतिको चुरीफुरीले चिथोर्न खोज्थे । त्यो चिथोरचाथोरमा पनि असिम माया थिए । हामी तिनको मायालु स्पर्शबाट आनन्दले अघाउँजी हुन्थ्यौं । त्यसैबीज अजङ्गको चट्टाने पर्वत र पहाडबाट पानीको समुद्र फुत्त निस्किएर स्वात्त झरेको देखियो । यसरी अकस्मात झरेको झरनाले हामी सबैलाई एकैचोटि एकैछिनमा

झसङ्ग मात्र होइन सचेत पनि पाऱ्यो। साह्रै आनन्दित बनायो। त्यो झरनामा कुनै अपरिचित र अस्पष्ट मानव आकृति चल्बलाइरहेको देखिन्थ्यो। पानीसँग लुकामारी खेलिरहेकी कुनै चञ्चले नवयुवती थिइन् कि !

पहाडको माथि उचाइबाट गड्गडाएर खसेको झरना। त्यो झन्कारले सुस्त गति वा सुस्त मनःस्थितिका मनुष्यलाई समेत बिउँझाउन सक्थ्यो। हामी झस्किँदै त्यसको गतिशीलताप्रति मन्त्रमुग्ध भयौं। आवाजको वेग हुरीबतास सरी। हुत्तिएर पोखिएको पानी कति-कति। हामी पानीको निर्वस्त्र लीलामा लीन भयौं। हिंड्दाहिँड्दैका हाम्रा पाइला टक्क अडिए। बोल्दाबोल्दैका वाक्य हठात् बन्द भए। हाम्रा आँखा र मन एक्कासी त्यही निर्वस्त्र सुकुमारी सरोवरमै सरुवा भए। नयनाभिराम त्यही निर्झर प्रकृतिमा हामी नतःमस्तक भइरह्यौं।

पानीबाट सङ्गीत निस्किन्थ्यो। अनौठो तरङ, तरेली र आवाज गुन्जायमान थियो त्यो एकान्त लेकमा ! प्रत्येक क्षण नयाँ धुन, प्रत्येक पन नवीन बुँद र प्रत्येक दृश्यमा नुतन विम्ब थियो। अनि रेशारेशामा विभक्त पानीका थोपा-थोपामा छरपष्टिएर विलीन बन्थे। एउटा रहस्य थियो त्यहाँ। अस्पष्ट कुनै आकृति त्यहाँ चलबल गरिरहेको देखिन्थ्यो। त्यो आकृति पानीसँगै मिसिएर पानी जस्तै निर्वस्त्र थियो। प्रकृति जस्तै नाङ्गो थियो। त्यो कहिले बाफ बनेर उडिरहेको हुन्थ्यो। कहिले पानी बनेर बगिरहेको हुन्थ्यो। कहिले मूर्ति जस्तै स्तब्ध स्तम्भ बनिरहेको हुन्थ्यो। अन्ततः निर्वस्त्र-निर्वस्त्रबीचको आकर्षण, विकर्षण र घर्षणमा अनेक अर्थ अभिलिखित हुन्थ्यो।

झरनामा कुनै नवयुवती धेरै दिनपश्चात् नुहाइरहेकी छन् भन्ने भ्रम हुन्थ्यो। सर्लक्क परेको शरीर। लामो कपाल पानीमा सल्बलाई रहेका थिए। त्यसैमा समाहित पानीका अजस्र भेल। साबुनका गजगजी फिँज काड्दै युवतीको कुमारी अङ्गअवयवलाई रहस्यमय किसिमबाट लुकाइरहेको थियो। यतिबेलै पानी सर्लक्क सुकिदियो भने ती नवयुवतीको लाज कसले लुकाउने ? तिनको के हालत होला ? त्यो सुन्दर निर्वस्त्र सौन्दर्यको स्वरूप नरहन पनि सक्दथ्यो।

हामीले यस्तै प्रश्न आफू-आफैंलाई गऱ्यौं। कसैले त्यो आवाजमा आवाज मिसाए त्यसपछि सौन्दर्यकै पूर्णविराम हुन्छ। त्यहाँ हेर्नुपर्ने कुनै अवशेष नै बाँकी रहँदैन। झरना बगेको थियो र युवती त्यसमा निर्भय नुहाइरहेकी थिइन्। यदि झरना थिएन भने कहाँ स्त्री, कहाँ स्नान ! हामीले हेर्न खोजेको दृश्य रहँदैन। अर्थपूर्ण, अर्धमुदित आकृतिको उपस्थिति हुने सम्भावना पनि हुँदैन थियो। त्यहाँ त केवल आँखाको भ्रम हुन्थ्यो। मनको कौतुहलता मात्र रहन्थ्यो सायद। स्वप्नसंसारको क्षणिक आवृत्तिबाहेक अरू केही हुँदैन।

साँचो कुरा यही हो। यही स्वरूप-समग्र नै हिजादेखि आज अनि भोलिसम्म रहिरहनुपर्छ। यात्रामा यता निस्किने प्रत्येक यात्रीले यसमा स्वतः दृष्टि दिन्छन्। रहस्य र रोमाञ्चक क्षणमा उनीहरू सधैं प्रफुल्लित भइरहन्छन्। वर्षौं अगाडिबाटै यसैगरी कैयौं पदयात्रर यस किसिमको रोमाञ्चक र रहस्यले भरिपूर्ण झरनामा रमाएका थिए। त्यो हेरेर मोहित हुँदै आएका होलान्। अनेक काउकुती कुरीकुरीले कताकति आफ्नै मनकी मायालुकै प्रतिबिम्ब दृष्टिगोचर गर्लान्। प्रकृतिको अद्भुत लीलाप्रति नतःमस्तक हुँदै हिँड्लान्। हिँडेका होलान्।

त्यहाँ पानीको बेग धुवाँ जस्तै मुस्लो बनेर निस्किएको थियो। पानीको प्रवाह स-साना धागोका धमनी भएर पहाडका भीरभरि फिँजिएका थिए। त्यस्तै धागो र ध्वनि बनेर पोखिएका थिए पानी कण-कणमा। पानीको बेग झरनाको लामो भेल बनेर झरेका थिए अनन्त यात्रामा।

चट्टाने पर्वतको उचाई थियो डरलाग्दो अग्लो। चट्टानलाई छिचोलेर हुर्किएका थिए केही रूखविरुवाका बोटबुट्यानहरू। आकाशलाई नै छोइरहेझैं लाग्ने त्यही गगनचुम्बी पहाड। त्यसकै टाकुराबाट पानीको बाढी आइरहेको थियो। त्यो बाढीमा कुनै धुलो वा धमिलो मिसिएको थिएन। सङ्लो पानी एकनास प्रवाहमा झरना रूपी उत्ताल तरङ पखेरामा तरङ्गित भएका थिए। धरतीमा बज्रिएर अनौठो रुपरङ र आवाजमा दृश्यमान थिए ती पानीका बुँदहरू।

देख्दैमा कठोर चट्टान। निरङ्कुश र निर्दयी। ज़बर्जस्तीको निरश त्यही ढुङ्गेपहाड जहाँबाट आवृष्टि भएका पानीका आदिम बाढी शान्त सागर-स्वरूपमा प्रवाहित थिए। त्यस किसिमको मरूभूमितुल्य रूखो भित्ता। कसरी त्यहाँबाट पानी रसाएर भेल बगेको होला ? आश्चर्य लाग्नु स्वाभाविक थियो। पानीका ज्वारभाटा। पानीका प्रज्ज्वलित ज्योतिपुञ्ज असिनपसिन हुँदै दौडिएका थिए। त्यो दौड 'ओलम्पिक गेम' भन्दा कम रोचक थिएन।

त्यसैले त्यो बाटो भएर हिँड्ने यात्री त्यो दृश्य नहेरी अगाडि बढ्न सक्ने कुरै भएन। जहाँ घामपानीको प्राकृत दीप्ति विछट्टैको विम्ब प्रस्तुत थियो। जहाँ शान्त, शीतल र सुन्दरता थियो। त्यो विम्ब रङैरङ्को इन्द्रेणीमा रूपान्तरित भई अर्को सुन्दरता उद्घाटित गर्दथ्यो। त्यो इन्द्रेणीरङ्का वृहत् आयाम र विचारका शृङ्खला थिए। त्यहाँबाट एकैचोटि ह्वात्त समुद्रै त्यहीं ओर्लिएको अनुभूति हामीलाई भयो। सेतो रङ दूधजस्तै एक मुस्लो कुहिरो मुहानबाट हाम्फालेर झरेको थियो। त्यसंपछि त्यसैबाट बनेका थिए हाँगाबिँगा अनेक कृति, आकृतिहरू। रूवा जस्तै हल्का र नरम कमनीय बनेर फेरि विस्तारै पग्लिदै बगेको रूपको बयानै गर्न सकिँदैनथ्यो।

रातदिन यसका साक्षी थिए-ढुङ्गा, रूखबिरूवा, पहाड र गाउँलेहरू। सायद तिनलाई पनि थाहा नहुन सक्छ यसको असली अवस्था। किनभने झरनामा नुहाइरहेकी ती युवती दश वर्षपहिले आउँदा पनि यसरी नै अर्धनग्न स्नानकर्ममा लीन थिइन् अनवरत। आज पनि उही अवस्थामा आफ्ना सुकुमारी शरीर सुम्सुम्याउँदै पखालिरहेकी थिइन्।

उनलाई चोख्याउन आकाशबाट दूध बर्सिएको थियो। दूधकुण्डमा युवती अङ्ग चोबलिएको दृश्य थियो। पहाड, ढुङ्गा वा चट्टान मात्रै होइन एउटी नवयुवतीको शरीर दूधले नुहाएको दृश्य साक्षात्कार थियो। दूधवर्षामा युवती यौवनले मस्त मन पखाल्दै, मिच्दै, भिज्दै अस्पष्ट आकृति दृष्टिगोचर हुन्थ्यो कौतुहलताको हामी जस्तै अरु यात्रीलाई पनि।

कवि भूपी शेरचनको कविता आशयमा अभिव्यक्ति सामेल गराउँदा अर्थ-अभिप्राय अरू टङ्कारो हुन्छ। शेरचन शब्दझैं शुभ्र, शान्त र स्निग्ध कुनै नवयुवती जो प्रथम रजस्वलापछि, आफूलाई चोख्याउँन पवित्र झरनाभित्र पसेर मस्तले नुहाइरहेकी छन्। आफूभित्रका सारा मैलाहरू पखालिरहेकी छन्। सम्पूर्ण दोष र दु:खहरू धोइरहेकी छन्। आफूभित्रको नारीशक्ति गतिशील पार्न सङ्घर्ष गर्न सिकिरहेकी छन्। उनी आफूलाई प्रकृतिमै प्रस्तुत गरेर पढाइरहेकी छन्। पानीमा पौडिएर आफूलाई पारङ्गत पारिरहेकी छन्।

उनको ध्यानमग्न स्थिति पनि हुन सक्दथ्यो त्यो। शिक्षित, चेतनशील, सभ्य, सुसंस्कृत र आधुनिक नारी बनेर निस्किन उनका अहोरात्रको त्यो ध्यान पनि हुन सक्दथ्यो। उनी योगसाधनमा समर्पित भइरहेकी साधक पनि हुन सक्दथ्यो। जे होस् मानिसलाई अनेक अर्थ, अनुभूति र रहस्य रोमान्सले स्पन्दित पार्दै झरनामा युवती नुहाइरहेकी थिइन्। त्यहाँ जान सकिंदैन। उनीसम्म पुग्नु पनि हुँदैन। केवल हेर्न सकिन्थ्यो टाढैबाट। भेट्न सकिन्थ्यो नजिकै पुगेर। अनि अनेक कल्पनामा रमाउन सकिन्थ्यो त्यहाँ। वास्तवमा सपना जस्तै एक मीठो भ्रम ! यो संसार पनि त एकप्रकारले भ्रममै अल्मलिएको छ। त्यहाँ जात, धर्म थिएन। क्षेत्र, लिङ्को पनि कुनै विवाद थिएन। समावेशीपनमा समाहित सबै पानीझैं कन्चन काया स्वरूपमा रूपान्तरित थिए। जहाँ शक्तिको बाँडफाँड र झैझगडा कहिल्यै कदापि हुँदैन। जहाँ राजनीतिको कुनै रङ लागेको हुँदैन। त्यहाँ असहमति र असमझदारीको वातावरण पनि हुँदैन। हुँदैन कुनै विरोध र बाधा। केवल छाइरहेको शान्ति, समानता र मित्रता सर्वत्र।

युवतीलाई सिनित्त पखालेर उछिट्टिंदै बगेका पानीका उत्ताल छाल यसरी ओर्लिएका थिए कि मानौं त्यहाँ अरू कोही कसैले बाटो छैक्न सकिंदैन। बलवान बज्रस्वाँठ नै आए पनि त्यहाँ नत:मस्तक हुनुपर्थ्यो। त्यहाँ कसैले बाटो अवरुद्ध गर्नुहुँदैन। ऊ

निर्भय आफ्नो प्रवाहमा छचल्किँदै बगिरहेको थियो ।

बग्नु नै उसको कर्म हो । बग्नु नै उसको दैनन्दिनी पनि हो । बग्नु नै उसको धर्म पनि हो । त्यस कर्ममा ढुङ्गा, माटो, मुढा, चट्टान, छहरा कुनै कसैको रोकावट थिएन । बरू तिनैसँग अङ्गालो मार्दै, तिनकै हातमा साथ राख्दै पानी जीवन भएर बगिरहेको थियो । जीवन पानी भएर । जीवन एउटा अविच्छिन्न यात्रा । त्यसैमा गतिशीलता नै आफ्नो पहिचान बनाएको थियो । प्रकृतिको नियममा ऊ प्रतिबद्ध थियो । ऐन कानूनलाई मिच्न सक्दैन । नियमसँग निडर हुन उसलाई आउँदैन ।

त्यसैले त्यो निर्वस्त्र पानी आफैंमा सङ्लो थियो । आफैंमा प्रीतिकर पवित्र थियो । पानीका लाखौं, करोडौं 'बबल्स' निस्किएका थिए । पानीका ती कलात्मक 'बबल्स' ले मानौं प्रकृतिमा अनौठो सौन्दर्य सृष्टि गरिरहेझैं लाग्दथ्यो । रङ्का अनौठो आकृतिका अनेकौं स्वरूप ! अचानक देखापर्ने, फेरि विलाउने र बयलिने त्यो क्रम क्रमागत हिजोदेखि आजसम्म निरन्तर थियो ।

पानीले आफ्नो यात्राका सबैसँग समान सद्भाव राख्दै आएको छ । त्यो नाता हिजादेखि आजसम्म उही छ । उस्तै परम्परा नित्य-निरन्तर कायम गर्दै आएको छ । त्यो यही पानी हो जसले आज सम्पूर्ण प्राणीको प्राण बचाएको छ । सबैको जीवनलाई पखालिदिएर चोख्याउँदै जीवनको नवीन अध्याय र यात्रामा अनवरत डोऱ्याएको छ ।

कतिलाई यसैगरी पखालेर पवित्र र चोखो पारिदिएको छ । कतिलाई जीवनदान दिएको छ । पानी, प्रकृति र जीवन एकअर्काको पर्याय पनि हो । पानी नभए कहाँ प्रकृति ? कहाँ जीवन ? कसैको कल्पनै गर्न सकिदैन । जस्तो कि चन्द्रमामा पानी छैन र त्यहाँ जीवन छैन । जहाँ पानी हुन्छ त्यहाँ नुवाईधुवाई हुन्छ । जहाँ नुवाईधुवाई हुन्छ त्यहाँ निर्वस्त्र सौन्दर्य उद्घाटित हुन्छ । पवित्र निर्वस्त्र सौन्दर्यमा श्लील र अश्लीलता भन्ने नै हुँदैन । त्यहाँ प्रकृतिको सुन्दरता अवतरित हुन्छ ।

हाम्रो भूगोल नै निर्वस्त्र छ वास्तवमा । तर निर्वस्त्र भएर पनि प्रकृति नाङ्गो हुँदैन कदापि । उदाङ्गो भएर ह्राङ्गै खुल्लमखुल्ला होइन । विशिष्ट शिष्टता थियो । अशिष्टता होइन । ब्रू हामी वस्त्र भएर पनि निर्वस्त्र छौं । महङ्गा लुगा र गहना लगाएर पनि हामीले उल्टो आडम्बर प्रदर्शन गरिरहेको अनुभव त्यो क्षण हामीलाई नभएको होइन ।

नुहाइरहेकी ती नवयुवती त झलक्क सामुन्ने देखिएकी एक साक्षात् प्रतिविम्ब मात्रै हुन् । बाँकी धेरै कुरा रहस्यमा छ । त्यो रहस्यको पर्दाफास हुन शताब्दिपश्चात् पनि सकिदैन सायद । रहस्यको सिलसिला भावी दिनसम्म पनि कायमै रहनुपर्छ । त्यो रहस्य आजै खुल्यो भने त त्यसप्रतिको आकर्षणकै अन्त्य हुन्छ । आँखाले हेर्ने तमाम

आकृतिमा पूर्णविराम लाग्छ। अनि यतातिर आक्कलझुक्कल पर्ने आँखा अन्यत्रै गइदियो भने यहाँका सौन्दर्यको अर्थ अन्धकार अन्कटारमै अलमलिरहने छ।

त्यसैले निर्वस्त्र होइन केवल हाम्रै नाङ्गो आँखाको भ्रम हो त्यो ! मुस्कुराइरहेको मनाङ पुग्नुअघि नै यसरी मस्तकी झरनाले हामीलाई मोहित पारिदियो कि हाम्रा सारा थकाइ मेटियो। हामीले पुग्नुपर्ने गन्तव्य नै बिर्सियौं।

त्यहाँ गाजलु आँखाको दीप्ति पनि थिएन। न त लज्जालु मुस्कानकै उपस्थिति थियो। सेतो दाँतलाई रङ्गीन ओंठले छोपिदिएको पनि थिएन। थियो एउटा निर्वस्त्र आकृति कुनै नवयुवतीको। वास्तवमा यही निर्वस्त्र परिवेशमा हामी भूलियौं। यसैमा संसार भूलिएको छ। त्यही नाङ्गोपनमै छ संसारको यथार्थता। यसमै छ आकर्षण र विकर्षणका घटनाहरू। अनायसै आँखालाई स्पर्श गर्ने त्यो मादक निर्वस्त्र सौन्दर्य। कुहिरोले नढाकेको हिमाल जस्तै निख्खुर निर्वस्त्र, फूलैफूलको रङ्गीन जीवन जस्तै निर्वस्त्र सौन्दर्य। आवरणमा कुनै बनावटी आडम्बर होइन मात्र स्वाभाविकता प्रकृतिको। मात्र वास्तविकता जीवनको।

*काठमाडौं, नेपाल*

# दुर्मुखाको पोई

*डिल्लीराम शर्मा भण्डारी*
*'विमोही साईंला'*

वनविच बनि सिंहै गर्जंदै हिन्नु बेस
कुमति जन बनाई मित्र नै हुन्छ वेश।
मन अति गरिसानु प्युँन सक्नेछ मोहि
तर नबनुँ म कैल्यै दुर्मुखाको त पोई ॥१॥

यदि गइकन नङ्गा पौषको लामु रात
सहजसित हिउँमा माथमा राखि हात।
खुशिसित त अवश्यै काट्न सक्छन् कि कोहि
तर नबनुँ म कैल्यै दुर्मुखाको त पोई ॥२॥

भवन वन समानै दुर्मुखा हुन्छे जाहाँ
मन पनि अति भारी हुन्छ रात्री दिनैमा।
वन विच गज गैंडा पानीमा हूँ म गोहि
तर नबनुँ म कैल्यै दुर्मुखाको त पोई ॥३॥

धिपि धिपि जुन सन्ध्यामा त बल्दैन बत्ती
भनुँ पनि कति भन्ने बात सुन्दिन रत्ति।
मुख थुनि बरु बस्नै वेश होला र कोहि
तर नबनुँ म कैल्यै दुर्मुखाको त पोई ॥४॥

सब तिर छन भाँडा ती ढलेका अनेक
घरभर छ कसिङ्गर लौ बढारे भने त।
मुख र नथनि सङ्गै बोल्न सक्ने छ तेहि
तर नबनुँ म कैल्यै दुर्मुखाको त पोई ॥५॥

सबदिन पनि रातै हुन्छ त्यस्तो घरै ता
न त परि पनि सक्नै हुन्छ तिन्को भरै ता।
अधम गृहिणी बोली चर्कने सुन्छ रोई
तर नबनुँ म कैल्यै दुमुर्खाको त पोई ॥६॥

न त घर भरका नै ती जहानैहरूका
सहज सरल बातै सुन्न सक्छे अरूका।
उधुम नगरि काहिं बोल्न सक्छे र कोहि
तर नबनुँ म कैल्ये दुर्मुखाको त पोई ॥७॥

न त कहिं दिन कोहि हुन्छ मुखै उज्यालो
सबदिन छ अँध्यारो मुखकै कान्ति कालो।
सब दिन यहि मात्रै देख्छ लौ है विमोहि
तर नबनुँ म कैल्यै दुर्मुखाको त पोई ॥८॥

न त पति सित राम्रा बात हुन्छन् कुनै दिन्
न त सब ति छिमेकी साथमा मेल नै छन्।
कति दिन म फकाई काम लाउनु रोई
तर नबनुँ म कैल्यै दुर्मुखाको त पोई ॥९॥

जब उठि म विहानै स्नान सन्ध्या सकेर
प्रति दिन निजको त्यो काममा लाग्दछु र।
सकि कन पनि कामै हेर्दछु नेत्र फोई
तर नबनुँ म कैल्यै दुर्मुखाको त पोई ॥१०॥

सबदिन नटुटाई नौ बजे सम्म सुत्नु
उठिकन अनि साना बालबच्चा ती कुटनु।
अलिकति अरू बोले दिनकाट्ने छ रोई
तर नबनुँ म कैल्यै दुर्मुखाको त पोई ॥११॥

कि त घर भरका ती फ्याँक्तछे मालताल
कति र छु म त दुःखी रै छ कस्तो नि भाल।
बचनरूपि गदाले हान्दा बस्छु रोई
तर नबनुँ म कैल्यै दुर्मुखाको त पोई ॥१२॥

यसरि दिन बिताई स्नेह नै छैन काहिं
उजुर पनि कति हो सुन्नु कस्को म जाई।
जति सित पथमा भेटै पनि हुन्छ तेहि
तर नबनुँ म कैल्यै दुर्मुखाको त पोई ॥१३॥

*गोपालनगर, नयाँ दिल्ली*

# नेपाली भाषाको जन्मलग्नदेखि मध्यकालसम्मको झलक

*मित्रदेव शर्मा*

राजस्थानबाट धेरै संख्यामा राजपुत, चारण आदि जनगोष्ठी धर्मान्तर हुनबाट जोगिन दशौं र एघारौं सदीमा उत्तराञ्चल र नेपाल तर्फ बसैं सर्छन्। उनीहरू साथैमा भाषा र संस्कृत बोकेर गएको हुनाले स्थानीय मङ्गोल र किरातहरूको भाषा संस्कृतिसित नयाँ भाषा र संस्कृति घोलिन्छ। राजस्थानी र नेपाली भाषाको सम्पर्क त्यसकारणले नजीक रहेको पाइन्छ। भाषा शास्त्रीहरूले गरेको दुवै भाषाको आविर्भाव काल पनि एउटै मानेका छन्। ससना भूखण्डमा विभाजित नेपालका रजौटाहरूमा राजस्थानबाट आएका राजपुतमूलका शासकले प्रभाव फैलाउँछन्। समय प्रवाहमा संमिश्रित भाषा साथै संस्कृति एकरूपता आउँछ।

आर्य इरानली शाखाबाट संस्कृत, प्राकृत र अपभ्रंश हुँदै विकसित भएका भाषाहरू भित्रकै एक भाषा नेपाली हो भनेर भाषाशास्त्रीहरूको मान्यता छ। यो मूलका सबै भाषाहरूको जन्मकाल १०५७ को छेउछाउ भन्ने विद्वानहरूको मत छ। नेपाली भाषाको पूर्व नाउँ खस कुरा अथवा खस भाषा थियो। यो खस भाषा तीन शाखामा खण्डित छ।

(क) केन्द्रीय खस भाषा—गढवाली, कुमाउँनी।

(ख) पश्चिमी खस भाषा—जौनसारी, सिरमौरी, क्योँठाली-चमाली, कुल्लुली।

(ग) पूर्वीय खस भाषा नेपाली।

पश्चिम नेपालको सिञ्जानाउँको गाउँमा राजधानी स्थापना गरेर एघारौं शताब्दीमा नागराज नाउँका राजाले राज्य स्थापना गर्छन्। यो ठाउँ कर्णाली क्षेत्रमा पर्छ। नागराजले पूर्वीय खस भाषालाई आफ्नो राज्य भाषा बनाउँछन्। नेपाली भाषाले राजभाषाको मर्यादा प्राप्त गरेर पन्पिने प्रारम्भ यहीनै मानिन्छ। उनको पछिका छैठौं पुस्ताका सन्तान राजा अशोक चल्लको सम्वत् १३१२ मा लेखिएको ताम्रपत्र हुम्ला जिल्लाको रेलिङ् गुम्बामा पाइन्छ। नेपालीमा यो ताम्रपत्र लेखिएको छ तथा आजसम्म उपलब्ध नमुनाहरू मध्यमा पहिलो मानिएको छ। तसंर्थ १३१२ सम्वत् नै नेपाली भाषाको उठान बिन्दु मानिएको छ। भाषा अन्वेषकहरूले भाषा विकास काल तीन चरणमा विभाजित गरेका छन्:—

(१) प्राचीन नेपाली—११ औं देखि १५ औं शताब्दीसम्म।

(२) मध्यकालीन नेपाली—१५ औं देखि १९ औं शताब्दीसम्म।

(३) आधुनिक नेपाली—२० औं शताब्दीदेखि।

उल्लेखित प्राचीन नेपालीलाई सिञ्जाली अथवा खसभाषिका भनिन्थ्यो। यसै भाषाको विकसित अर्को ताम्रपत्र डोट्याली राजा नियरपालद्वारा सम्बत १४४९ मा लेखाइएको पाइन्छ। खस नरेशहरूको प्रभावक्षेत्रका साथमा भाषा पनि विकसित र विस्तारित भएको थाहा पाइन्छ।

कर्णाली र गण्डकी अञ्चलका यो पछिका राजाहरू दुर्बल हुनाले राज्य बहुखण्डित हुन्छ। भाषा विकासमा यसको प्रतिकूल प्रभाव पर्छ। भाषा पनि खण्डित हुने उपक्रम आइ पर्छ र एकरूपता हराउन थाल्छ। १५५५ सम्वतमा लेखिएको अर्को अभिलेख प्राप्त भएको छ। यो अभिलेखमा भाषाका मध्यकालीन लक्षण पाइन्छन्। यो वर्षलाई नेपाली भाषाको मध्यकालको प्रारम्भ मानिएको पाइन्छ। यो अवधिमा भाषाले काठमाण्डौ उपत्यकातिर प्रवेश गरेर पूर्वतिर फैलिन थाल्दै मोरङ्सम्म प्रवेश गर्छ। यो अवधिमा भाषाका धेरै भेदहरू देखा पर्छन्। यीनै भाषिकाका बीचबाट गोर्खाली भाषा विकास हुन्छ। नेपाल एकीकरण अभियानको फलस्वरूप गोर्खाली भाषाको महत्व बढछ र समग्र नेपालीमा भाषा प्रसारितं हुन्छ। एकीकरण पछिका लेखकहरूले यो भाषामा लेख्न थालेपछि गोर्खाली भाषाको विकास नेपाली भाषा नाउँले हुन गएको हो। त्यो कालमा विभिन्न भाषाका र गोष्ठीका बीच यो भाषाले सम्पर्क भाषाको मान्यता पाउँछ। १९ शताब्दी पूर्वका नेपाली साहित्यका कुनै रचना उपलब्ध भएका छैनन्। यो अवधिसम्मका राजकीय अभिलेख अथवा शास्त्रीय ग्रन्थमात्र पाइएका छन्। अभिलेखहरूमा उल्लेखित राजा, स्थान, सम्वत र नमुना तल उल्लेख गरिन्छः—

(१) राजा दामुपाल—दुल्लु-१०३८-ॐ द्भे हूँ दामुपाल भुपाल रेष भई। किष्णु अडैको भाइ। सउपाल अडै सा ९०३।

(२) संग्राम मल्ल—डुम्राकोट ११४६ राइका भाष पासाकि अक्रि। जय विद्याधर का चेला सर्वु गुनु चारू जना नेपा संकल्प करि रस्यो बस्यो करि पाइ।

(३) भारशिव मल्ल—१२५४—स्रिसाको १९१९ वैसाख कृष्ण पक्षे अष्टमी तिथौजिव वसारे स्रि राजाधिराज भारशिव मल्ल पादश्चिर जयतु।

(४) अशोकचल्ल—रेलिङ्गुम्वा-१३१२—हाम्रा आलि अटल कारि अत्र्या छु।

(५) अशोकचल्ल—ककर्यानी—१३१७-२७ सअना कार्कि साऊका कर्कयानी को देवल।

(६) अक्षयमल्ल विनायक देवल—१३३७-जैराज प्रसाद करायो साके १२०२ सुत्रधार नागदेव नाम कमायो।

(७) आदित्यमल्ल—गोर्खा सम्दु—१३७८—राइका भाष् पसांकि अन्कि। हाम्रै छत्रु नास हो हामि दानपति हो हाम्रा रख्या स्वस्ति पायिथान रक्षा वा छन् कटक् आउदा जादा गुम्वा घचनकिय।

(८) अभयमल्ल—दुल्लु—१४४८-राइका आदेश आदिकारी हित राउल रोकाया होगातल मुटिक निक शकम्सा।

नेपाली भाषामा ग्रन्थ आकारमा लिखित दस्तावेज १४५७ देखिका मात्र आजसम्म उद्धार भएका छन्। अठारौं सदीको अन्तसम्म लेखिएका एघार ओटा ग्रन्थ भेटिएका छन्। सबै ग्रन्थ गद्यात्मक शैलीका छन्। नाउँ र रचनाकाल सो प्रकार छ।

(१) भास्वती (ज्योतिष सम्पर्कित)—१४५७
(२) राजा गगनिराजको यात्रा (भूमि व्यवस्था सम्पर्कित)—१५५०
(३) खण्ड खादा (ज्योतिष)—१६४८
(४) पञ्च परिलेख (ग्रहण)—१६४८
(५) जातक कर्म पद्धति—(बालक जन्म संस्कारादि)—१६४८
(६) ग्रह उदयास्त (ज्योतिष)—१६४८
(७) बाज परीक्षा—१७००
(८) ज्वरोत्पत्ति चिकित्सा—१७७३
(९) माश निदान वा औषध रसायन १७७०-१८००
(१०) प्रायश्चित्त प्रदीप—१७८०
(११) नृपश्लोकी—१७८० भन्दा पछि

उन्नाइसौं शताब्दीपछि नेपाली भाषामा ग्रन्थ रचना धेरै संख्यामा हुन थाले। नेपाली भाषाको मध्यकालको अन्त तथा आधुनिक कालको शुरूवात अनिमात्र हुन्छ।

आधुनिक नेपालको एकीकरणको समयमा नेपाली पद्य साहित्य थालनी भएको हो। तर त्यो अघि देखिनै झ्याउरे, रसिया, बालुन आदि लोकगीत कथिन्थे र गाइन्थे भन्ने पत्तो लाग्छ। फेला परेका नेपाली कविताहरूमा सुवानन्द दासका कविता नै प्राचिनतम मानिएका छन्। शक्ति वल्लभ अर्य्याल र उनका भतिजा उदयानन्द अर्य्यालको नाउँ त्यो पछि आउँछ। यिनीहरूले शुद्ध नेपाली र शास्त्रीय छन्दमा कविता रचेका छन्। सुन्दरानन्द बाँडाले पद्य र गद्य दुवै विधामा लेखेका छन्। यिनी पछि राधानन्द अर्य्याल, रामभद्र पाद्धा, गुमानी पन्त परवर्त्ती कालमा आउँछन्। नेपाली साहित्यमा कृष्ण भक्ति धाराले प्रवेश गरेको पाइन्छ। इन्दिरस, विद्यारण्य केसरी, वसन्त शर्मा

लुईंटेल, वीरशाली पन्त, यदुनाथ पोखेल, हीन व्याकरणी, विद्यापति, पतञ्जली गजुर्‍याल सबै कृष्ण भक्ति धाराका कवि हुन्।

वि.सं. १८६१ मा भानुभक्त आचार्यले आध्यात्म रामायणको आधारमा रामायण तथा अरू ग्रन्थ रचना गरे। नेपाली साहित्यको इतिहासमा नयाँ युगको प्रारम्भ त्यहीं देखि मानिन्छ। परवर्त्ती कालमा समग्र नेपाली जातिले उनलाई 'आदिकवि' को सम्मान दिएका छन्। आधुनिक युगारम्भ भानुभक्त देखिनै मान्नु पर्छ।

*असम*

## कर्त्तव्य-कर्म

*दिवाकर पौडेल*

आउँछ पालो सबैको तर ताकेर नबस।
हुनु छ जैले भएरै छाड्छ पछाडि नखस ॥१॥
अगाडि बढ नखाई हरेश सुवास छर्केर।
नखोज अब नाफा र घाटा कर्त्तव्य सम्झेर ॥२॥
कर्त्तव्य-कर्म कत्ति छ मीठो चाखेर हेर त।
पाउन्नौ हताश हुँदैनौ निराश दृष्टिलाई फेर त ॥३॥
अगाडि बढ-अगाडि बढ लक्ष्यलाई चुम्ने छौ।
ढिलो वा चाँडो जे जति हुन्छ अवश्य गर्नें छौ ॥४॥
चखेबी कहिल्यै भएर एक्लै चाहन्न बस्नलाई।
बाध्यता कस्तो पर्दछ उसलाई बिहानी कुर्नलाई ॥५॥
विवेकी प्राणी मानिस पनि स्वतन्त्र कहाँ छ र ?
चाहेको काम सोचेको कुरा भने झैं भा छ र ॥६॥
कर्र-काप होइन कर्त्तव्य सम्झ जो गर्‍यौ गर्दै छौ।
केही छैन ठूलो कर्त्तव्य भन्दा यही चीज रोप्दै छौ ॥७॥

*अमलाचौर-७ बाग्लुङ्ग (नेपाल)*

# के त्यो भूत हो ?

*खत्री कुमार*

धेरै दिन पहिलेको कुरा हो एक दिन मेरो पुरानो साथीलाई भेटेर घर फर्कंदा साँझ परी सकेको थियो। साथीले मलाई त्यस राति बस्न भनी जोडबल गारे तर मेरो जरूरी काम हुनाले मलाई घर फर्कनु नै उचित लाग्यो। साथीले घर अलिक छिटै पुग्नलाई छोटो बोटा देखाइ दिए। म त्यही बाटो लागें। त्यो छोटो बाटो नदीको किनारै किनार जाँदो रहेछ। साँझ बिती सकेको थियो। मैले टार्च लाइट बालेर त्यही बाटो अगाडि बढ्न लागें। जून उदाउन लागेका थिए। हिउँदको बेला निकै जोड़ा साथै मन्द मन्द चिसो बतास चली रहेको थियो। वातावरणमा भ्रयाउँकीरीहरूले पखेटा रेटेर बेसुरा स्वरमा गीत गाइरहेका थिए। म विगतको केही मजालाग्दो घटनाको सम्झनामा तल्लीन हिड़ि रहेको। थिएँ, आसपासका अग्ला अग्ला रूखहरू.सबै अँध्यारोको आवरणमा ढाकिएका थिए। एकै छिनमा जून उदाए। जून तारा लागेको आकाश र त्यसको उज्यालोमा हिंड़दा मैले टार्च लाईट निभाएर झोलामा राखें र जूनको प्रकाशमा मस्ती-ले हिंड़न थालें। नदीको बगरमा एक ठाँउमा जलेको दाउरा साथै ननिभेका कोइला साथै खरानी को थुप्रो देख्दा छेउमा गएर हेन उत्सुकता जागेर आयो र म त्यतै लागे। त्यहाँ गएर हेर्दा त्यो दिउँसो मुर्दा जलाएको चिता रहेछ। चारै तिर चकमन्त्र, मलाई एक्कासी लाग्यो मेरो जीउ बिस्तार बिस्तारै डरले काम्न थाल्यो। मैले मनमनै सोचें हे ईश्वर ! मैले के नचाहिंदो काम गरेछु र यस्तो मुश्किलमा परें। मेरो डरले सातोपूतलो उडेर गयो। अनि म हतार हतार त्यहाँबाट लामा लामा पाईला सार्दै आफ्नो बाटो लागें। फेरि बीच-बीचमा पछाड़ि हेर्दै अगाडि बढ्न थालें। मलाई कहिले कहीं अचम्म लाग्छ कोही बेला जंगलको बाटो या त्यस्तै डर लाग्ने बाटो हिंड़दा पछाड़िबाट कसैले पछ्याएको जस्तो भान हुन्छ। अगाड़ि पछाड़ि हेर्दै म हनुमान चालिसा पाठ गर्दै हिंड़न थालें। निकै टाढ़ा पुगेर म आफ्नो पुरानो मद्धिम चालमा आए।

मेरो मनमा तरह-तरह का सोच जन्ती जस्तै ताँती लागेर आउन थाले। हामी-हरू सानो छँदा गाउँ घरका बूढ़ा बूढ़ीहरूले भूत, प्रेत र मुर्कुटाका यस्ता यस्ता किस्सा बखान गर्दथे कि हामी केटाकेटी हरू डरले थरथर काम्न थाल्थ्यौ। केही कथम बाहिर पिसाब जानु पर्दा एक्लै नगएर साथी भाईको खाँचो पर्दथ्यो। त्यहीं भएर होला मरेको मान्छे देख्दा, मुर्दा डढ़ाउने घाट, चिहान घारी यहाँ तक कि मुर्दा हिंड़ाउने बाटो पनि राति हिंड़न धौ धौ पर्दथ्यो। आज एक्कासि यस्तो विपत्तिमा पर्दा सकेसम्मको ड़र लागे-

र आयो। डर लागे पनि त्यहाँ अरू केही उपाए थिएन। उपाय थियो त मात्रै हनुमान चालिसाको पाठ। त्यही पाठ पनि मलाई मेरा आदरणीय गुरुजीले सानैमा घोकाएका थिए र वहाँले भन्नु भएको बात याद आयो। 'हेर कुमार पवन पुत्र हनुमानको चालिसा जाप गरे कुनै थरीका भूत, प्रेत, मुर्कुटाहरूले बाटो छेक्दैनन् निर्धक्क भएर जहीं पनि जस्तै डर लाग्दो बाटो पनि हिड़न सकिन्छ। त्यति बेला मेरो त्यही मात्र एउटा दरिलो सहारा थियो। सुखद क्षण सोच्दै कति बेला घर पुगें थाहा नै भएन।

अर्को दिन म दिउँसो गाउँमा गएर अर्का साथी जसले रिपूलाई राम्ररी जान्दथे उनी सित मेरो राति बाटामा भेंट भएको साथी रिपूको जिक्र गर्दा ती साथी छक्क परेर मलाई हेर्न थाले। कुमार तिमी त सान्है नै छौ कि बौह्लाए छौ। रिपू मरेको त भण्डै चार पाचँ वर्ष भै सक्यो। उसको बाबु मरे पछि सबै सम्पति उसकै भयो सबै बेच विखन गरेर रकसी नै खाएर अलपत्र भई मऱ्यो तीन दिनमा गाउँले हरूले थाहा पाएर घाट पुऱ्याई सद्गति गरे। अनि कसरी तिमी रिपूत बाटामा भेट हुन्छ ? भाई कुमार अलिक गाउँ घरको पनि चासो राख भरे एक दिन यही गाउँ फर्केर आउनु पर्छ यार। भन्दै मलाई हेर्न थाले।

*अमरावती लैसङ (मणिपुर)*



**नेपाल साहित्यिक पत्रकार संघ द्वारा**
**दुर्गा प्रसाद श्रेष्ठ सम्मानित**

